།།ཏ་མང་ ཏུལ་བ་ལ་ ཁ་རྒྱུའི་ ཀི་ཏྲལ།།

# तामाङ जातिको

## मौखिक इतिहासका अवशेषहरु

## (THE REMNANT ORAL HISTORY OF TAMANG)

{कहाँ कहाँ थिए ?तामाङ राजा र राज्य}

अजितमान तामाङ

# ཏ་མང་ རུལ་བ་ལ ཁ་རྒྱུའི་ ཀེ་རུབ་

# तामाङ जातिको मौखिक इतिहासका अवशेषहरु

## (THE REMNANT ORAL HISTORY OF TAMANG)

सम्माननीय प्रधानमन्त्री लोकेन्द्र बहादुर चन्दज्यूबाट
प्रथम अन्तराष्ट्रिय तामाङ तामाङ सम्मेलन-२००२,
भृकुटिमण्डप, काठमाण्डौमा
२० दीसेम्बर २००२ का दिन विमोचित

## {कहाँ कहाँ थिए ? तामाङ राजा र राज्य}

अजितमान तामाङ



༔ ཏ་མང་ ཧྲུལ་བ་ལ་ ཁ་ཀྱུའི་ ཀེ་ཧྲབ་

# तामाङ जातिको मौखिक इतिहासका अवशेषहरू

(THE REMNANT ORAL HISTORY OF TAMANG)

प्रथम संस्करण : १००० प्रति,
ल्युइ क्याबा-ता ल्हो-२८३८ Dec. 2002

कृतिकार: अजितमान तामाङ



प्रकाशक : नेपाल तामाङ घेदुङका लागि कृष्णाराम दोङ

ISBN 99933-34-94-4




मुद्रक: समाचारपत्र अफसेट, भोटाहिटी, काठमाण्डौं

# { समर्पन }

आफ्नो जीवनको अन्तिम
घडिसम्म पनि नेपाल तामाङ घेदुङमार्फत
तामाङ समाज र संस्कृतिको संरक्षण, संवद्धन
तथा
विकासको निम्त कृयाशील अग्रजहरु
स्व.श्री परमानसिं मोक्तान बौद्ध,
निर्मल कुमार स्याङतान तामाङ बुढानिलकण्ठ,
बिरबहादुर गोले, धरान

༄༅། །ཛམ་བུ་ལིང་ཁོར་ལ་ ཡེག་ཚ་ ཏ་མང་ ཛོམ་ན།།

༣༨༣༨

# प्रथम अन्तराष्ट्रिय तामाङ सम्मेलन तथा तामाङ महोत्सव

# ११२३

# को पुनित अवसरमा

**On The Occasssion of First International Tamang conference**

&

Tamang Festival,

19-22 : Dec. 2002 Kathmandu, Nepal




# {प्रकाशकीय}

ऐतिहासिक प्रथम अन्तर्राष्ट्रिय सम्मेलन तथा तामाङ मोहत्सवको पुनित अवसरमा मेरा तामाङ घेदुङको पुनरगठनदेखिको मित्र श्री अजितमान तामाङज्यूले तामाङ भाषा, लिपि, धर्म आदि आधा दर्जन भन्दा बढी पुस्तकहरुको रचना गरि सक्नुभएको छ। लेखक तथा तामाङ भाषाका साहित्यको श्रष्टा श्री अजितमान तामाङ ज्यूले हालै तयार गर्नुभएको यो "'तामाङ जातिको मौखिक इतिहासका अवशेषहरु' नामक पुस्तक प्रकाशन गर्ने अवसर दिनुभएकोमा आभार प्रकट गर्दछु । यो पुस्तकले निश्चय पनि तामाङ जातिका उत्पति, इतिहास, भाषा तथा तामाङ लिपि तामयीगका बारे रहेको अस्पष्टतालाई वास्तविक धरातलमा पञ्याउन सहायक हुने छ । विषयमा आशा छ वहाँले यसरी नै भविष्यमा पनि तामाङ जातिको गौरव बढाउने कृतिहरुको आशा गर्दछु । थुजेछे ।

कृष्णराम दोङ
ताया-ला, फओी-क्याबा ताल्हो-२८३८, Dec. 2002
याम्बु (नेपाल)

# आफ्नो कुरा

आफ्नो जन्म गाउँमा नै तामाङ अुशीबा राजाका बारेमा ग्यन र छेच्युको अवसरमा गोर्खा ग्याल्बो र ग्याल्मो(गोर्खा राजा र रानी)को चेम्हा

(नाटक) देखेको थिए। जसले कुनै न कुनै समयमा नेपालमा तामाङ राजा र राज्य पक्कै थियो भन्ने दृढ विश्वास जगाएको थियो मलाई।

तर धेरै समयपछि मात्र अर्थात आज भन्दा १९ वर्ष अघि लिखित रुपमा होकि होइन जस्तो गरि पूर्व सहायक मन्त्री तिलक बहादुर नेगीज्यूको एउटा लेख "तामाङ जातिको उत्पति" पढ्ने अवसर पाएको थिएं। आठ वर्षपछि भने पुस्तककै रुपमा सिताराम तामाङले लेख्नुभएको "तामाङ जातिको उद्‌गम इतिहास र राष्ट्रियता बारे" र अंग्रेजी भाषामा परशुराम तामाङको "द तामाङ्स् अ फेस आफ नेपाल" भन्ने पुस्तकनै पढ्न पाइयो। त्यसरीनै सन् १९८४ मा दार्जीलीङका डा. जी.एस. योन्जनको *"इथ्नोग्राफीग नोट्स अन द तामाङ्स्"* लगायत क्रमश विभिन्न पत्र-पत्रिकामा तामाङ राजा, इतिहास र उत्पत्तिको बारेमा लेख रचना तथा पुस्तक आदिको साथसाथै वि.स.२०५१ सालमा आएर परशुराम तामाङको *"तामाङ जाति"* पुस्तक प्रकाशनमा आएपछि तामाङ जातिका इतिहासको बारेमा बढी सूचना तथा जानकारी प्रकाशमा आएको थियो।

यीनै पुस्तक तथा सूचनाहरुको आधारमा तामाङ जातिको इतिहास र उत्पति सम्बन्धि विभिन्न लेख तथा पुस्तिकाहरु क्रमैले प्रकाशमा आएका छन्। २०५१ सालमानै भक्तबहादुर ब्लोनको *"तामाङ इतिहास (एक झलक)"*, विदेश अष्ट्रियाकी गाब्रियला ट्राउश्चरले विशेषरुपमा सैलुङलाई केन्द्र बिन्दु बनाएर *(THE FIVE TAMANG ANCESTORs AND SAILUNG PHOI SIBDA KARPO)* तामाङ भाषामा ल्याउनुभएको छ। भने यो भन्दा पहिले अनद्रास होफर, डेभिड होल्मबर्ग, टोनी हागन, अलेक्जेण्डर एम. आदि थुप्रै विदेशी विद्वानहरुले आफ्नो शोध तथा पुस्तकहरुमा तामाङ इतिहासका बारेमा चर्चा गर्नु भएको छ। हाल साले रविन्द्र सि लामाको *"तामाङ जातिको ऐतिहासिक रुपरेखा"* र सन् २००२ मा हरिस चन्दलाल सिंहले THE ORIGN OF TAMANG लेख लेख्नुभएको थियो र दार्जीलीङबाट जि.टि. जिम्बाको *"तामाङ जातिको इतिहास र ताम्बाको चाङवाङ"* पुस्तक प्रकाशित भएका छन्।

तामाङ जातिको इतिहास सम्बन्धमा मलाई जानकारी भएसम्म तामाङहरुको सहभागिता र संयोजनामा ०५३ असोज २७, २८ र २९ गते हेराङ(ललितपुर)को दरबार स्क्वायरमा सम्पन्न भएको तीनदीने इतिहास गोष्ठिपछि दोश्रो पटक अखिल भारतीय तामाङ बौद्ध संघको आयोजनामा भएको (७ जुलाई २००२ दार्जीलिङ स्थित जि.डि.एस.एन.हलमा) अखिल भारतीय तामाङ बौद्ध संघको आयोजनामा "तामाङ जातिको सामाजिक इतिहास" विषयक गोष्ठि सम्पन्न भएको थियो। यी दुवै गोष्ठिहरुमा मैले सहभागि हुने अवसर पाएको थिएं।

मेरो सौभाग्य दार्जीलीङमा सम्पन्न इतिहास गोष्ठिमा कार्यपत्र प्रस्तुत गर्न मलाई पनि निम्तो प्राप्त भएको थियो। जुन बेला म सिक्किममा थिएं। सिक्किममै बसेर मैले तामाङ राजाहरुको मौखिक कथनमा आधारित "तामाङ जातिको मौखिक इतिहासका अवशेषहरु" नामको कर्यपत्र तयार पारें। यो कार्यपत्र मेरो अप्रकाशित "तामाङ अधिराज्यको मौखिक इतिहासको अवशेष (The Remnant Oral History of Tamang Kingdom)" भन्ने पाण्डुलिपिमा आधारित थियो र मैले प्रस्तुत गर्ने मौका पाएं। उक्त गोष्ठिमा आमन्त्रित प्रमुख अतिथि अनुपस्थित रहनु भएपछि प्रमुख अतिथी भएर उद्‌घाटन गर्ने अभिभारा नेपाल तामाङ घेदुङको केन्द्रीय सचिवको हैसियतले म माथि नै पर्न आयो। उक्त एक दिने तामाङ इतिहास गोष्ठिमा आफूले कार्यपत्र प्रस्तुत गरेको लगतै कालेबुङको तामाङ गोन्पामा सम्पन्न बृहत तामाङ भेलामा आफूले तामाङ संस्कृति र इतिहास बारे धेरैको मनमा जिज्ञासा रहेको र थप कुराको जानकारी लिने इच्छा भएको पाएं अनि मैले

सिघ्र यो ग्रन्थ "तामाङ जातिको मौखिक इतिहासका अवशेषहरु (THE REMNANT ORAL HISTORY OF TAMANG)" तयारी पूरा गर्न गान्तोकदेखि नै लागातार लागि रहें र आज यो रुपसम्म बनाएर प्रस्तुत गर्न सकेको छु। यो ग्रन्थलाई चार अध्यायमा विभाजित .
गरिएको छ। पहिलो अध्यायमा, तामाङ जातिको इतिहास जान्नु पहिले हामी तामाङ को हौं र के केले तामाङलाई तामाङ भनेर चिनाएका छन्.भन्ने संक्षिप्त चर्चा गरिएको छ। दोश्रो अध्यायमा तामाङ इतिहास सम्बन्धी शब्दको अर्थ र प्रयोग रहेका छन्। तेश्रो अध्यायमा तामाङ जातिको उत्पति
( ORIGN OF TAMANG) रहेको छ र चौथो अध्यायमा मौखिक रुपमा रहेको तामाङ अधिराज्य र तामाङ राजाहरु(THE REMNANT ORAL HISTORY OF TAMANG KINGDOM & KINGS)को चर्चा गरिएको छ।

यो ग्रन्थ अन्तर्राष्ट्रिय तामाङ सम्मेलन जस्तो पवित्र अवसरमा सबै सहभागि तामाङ विद्वानहरु माझ प्रस्तुत गर्ने मनसुवाले गर्दा कतिपय व्याख्या गरिनुपर्ने विषयहरुलाई सामान्य टिपोटको रुपमा मात्र प्रस्तुत गरेको छु। शुद्धाशुद्धि तथा बाँकि अपुग तथ्यहरु र व्याख्या विश्लेषण चाँडै नै अझ गहन अध्ययन गरि यसको दोश्रो संस्करणमा थप गर्नेछु।

यो ग्रन्थ जन्मनुको पछाडि गान्तोकका ज्योज्यो कुमार योन्जन, आदरणीय लामा गुरु ल्हाक्पा म्हेमे, सिक्किम तामाङ बौद्ध संघका महासचिव के एम तिदुङ अनि मुख्य रुपमा इतिहास गोष्ठिका आयोजक अखिल भारतीय तामाङ बौद्ध संघ केन्द्रिय समिति परिवार तथा संघका महासचिव आदरणीय एम.एस. बमजन ज्योज्यो, कोलकताका एम.के. घिसिङ आस्याङ आदिको सहयोग तथा अवसरले नै आज यो रुपमा प्रकाशन हुनसकेको हो तसर्थ उहाँहरु सबैमा आभार व्यक्त गर्दछु। विशेष गाङतोक सिक्किमका कुमार योन्जन ज्योज्यो चाङ, च्योनहरु, बुरीङ, दिपु अस्याङ लगायत परिवार प्रति कृतज्ञ छु।

नेपालमा हौसला प्रोत्साहन दिनुहुने तथा पाण्डुलिपिको अध्ययन गर्नु भई मन्तव्य राय सल्लाह दिनुहुने ज्योज्यो सीताराम तामाङ, घेदुङका अध्यक्ष तथा संयुक्त राष्ट्र संघ आदिवासी स्थायी मन्चका उपाध्यक्ष परशुराम तामाङ, घदुङका उपाध्यक्ष महेन्द्र योन्जन उलांबारी, पूर्व सांसद कमान सिंह लामा, डा. गणेश योन्जन, धर्मराज तामाङ, मुक्त सिंह लामा ज्यूप्रति दण्डवत गर्दछु।

यो पुस्तकको पाण्डुलिपिमा भएको भाषिक कमि कमजोरीहरुलाई मेहेनतका साथ हेरीदिनुहुने आदरणीय मित्र मातृका पोखरेलज्यू लाइं मुरीकामुरी धन्यवाद ज्ञापन गर्दछु। अन्य त्रुटिहरु खोजी खोजी केलाइ सहयोग गर्नु हुने मित्र लिलाबहादुर तामाङ र रविन गोले ज्यूमा पनि थुजेछे। पुस्तक प्रकाशित गरि दिनु भएकोमा श्री ककृष्णराम दोङ ज्यूलाइं सादर धन्यवाद चढाउंदछु। त्यसै गरी विभिन्न सूचनाहरु उपलब्ध गराउनुहुने आदरणीय आप्प्रेन सतलसी तामाङ, आपा जगतबहादुर तामाङ, आगु लामा रेमबहादुर तामाङ र हुंग बहादर तामाङ, धादिङ गऔराका धनसुर बाऔबा, सेमजोङका फुरमान योन्जन, बोराङका मार्का मम्बा, रत्नबज्र लामा(सिम्पु), पुण्यबज्र लामा (रानीबन), ताम्बा छ्योओी नाम्गेल लामा शिवालय काभ्रे र तेमालको राजा रिन्जेजदोर्जेको दरबारको भग्नावशेषको फोटो उपलब्ध गरी दिनु भएकोमा मित्र प्रतिक डेसुर र प्राविधिक राय सल्लाह तथा सहयोग गर्नु हुने रामबहादुर तामाङ ज्यूप्रति पनि धन्यवाद ज्ञापन गर्दछु।

मुद्रणका लागि शुलभ प्रकाशनार्थ परामर्श दिनुहुने आदरणीय मित्र सुजिन बज्राचार्यज्यू लगायत प्रत्यक्ष अप्रत्क्ष सहयोग गर्नुहुने सबैमा कृतज्ञता व्यक्त गर्दछु।

अन्तमा यसमा भएको प्राविधिक तथा प्राज्ञिक कमि कमजोरी तथा त्रुटिहरुलाई सुक्ष्म रुपमा खुट्याई राय सल्लाह सुझाव दिनु हुन आम पाठकहरुमा हार्दिक अनुरोध गर्दछु।

**ब्रीखेन**

ཕའོ་དྭ་པ་ དཀྲོ ༔ ༢༨༣༨ ཡམ་སུ फाओी-व्हाबा ताल्हो-२८३८

*Iron Male Horse Year-19 Dec. 2002*

# मन्तव्य



श्री अजितमान तामाङद्वारा लेखिएको "तामाङ जातिको मौखिक इतिहासका अवशेषहरु" को पाण्डूलिपि अध्ययन गर्ने मौका मिल्यो। लेखकले तामाङ जातिको पहिचान गराउने भू-क्षेत्र, इतिहास, संस्कृति, भाषा, भेषभूषा र सामाजिक परम्पराका विषयमा उठाउनु भएको कतिपय सन्दर्भहरु गम्भिर प्रकारका छन् र तिनले व्यापक छलफलको माग गर्ने देखेकोछु। विशेषगरेर उहाँले तामाङ, याम्बु, जोङ, रोङ, ग्रोङ आदि शब्दहरुको अर्थ र प्रयोजन खुट्याउनु तामाङ जातिको उद्‌गम र विस्तार-क्षेत्र पहिचान खोज्नु, तामाङ स्वशासित इलाकाहरु र तिनका जोड रहेको स्थान देखाउनु किपटका आधारमा तामाङका थरहरुको फोला र बाब्साको निर्माण हुनु, तामाङ समुहबाट छुट्टिएर बनेको अलग समुहहरु खुट्याउनु आदि जस्ता विषयहरु आगामी छलफलको विषय बन्न सक्तछ र यसले तामाङ भाषा(शब्द)लाई बंग्याउने वा आफ्नो स्वार्थ अनुकूल प्रयोग वा व्याख्या गर्ने र तामयीग (तामाङ लिपि)लाई अस्वीकार गर्ने स्वघोषित विद्वानहरुलाई पनि फेरि गम्भिर भएर सोच्नु पर्ने स्थिाति सृजना गरेको छ।

तामाङ जनजातिमा विशिष्ट ऐतिहासिक परम्परा, रीतिरिवाज, संस्कृति घटना, अभिलेख र अन्य पुरातात्वीक महत्वका वस्तु रहिआएका छन्। तर शासक वर्गबाट भएको युगौं लामो शोषण र उत्पीडनका कारण गरिबी र अशिक्षामा बाँचेका तामाङ समाजले ती सबैलाई जीवन्त राख्नु सजिलो थिएन। त्यसैले अब कतिपय अवशेष र श्रुतिका रुपमा मात्र रहन पुगेको सन्दर्भमा आफ्नो समाजप्रति कर्तव्यवोधबाट उत्साही युवा लेखकले तिनलाई लिखित रुप दिन· गरेको प्रयास सह्रानीय छ। तर यो कृतिले लेखकको थप मिहेनतको पनि माग गरेको छ। लेखकको मिहेनतले निरन्तता पाओस् र तामाङ समाज लाभान्वीत भईरहोस्। शूभकामना।

*सीताराम तामाङ*
(सल्लाहकार)
नेपाल तामाङ घेदुङ, केन्द्रिय समिति
तापा-ला फाअी-व्हावा ताल्हो २८३८, याम्बु

## शुभकामना मन्तव्य



श्री अजितमान तामाङज्यूले 'तामाङ जातिको मौखिक इतिहासको अवशेषहरु' नामक पुस्तक प्रकाशनमा ल्याउन लागेको जानकारी प्राप्त भई सो पुस्तकको पाण्डुलिपि सरसरी पढ्ने मौका पाएँ । पुस्तकको पाण्डुलिपि पढ्दा तामाङ जातिको परम्परा, इतिहास, भाषा, लिपि,, संस्कार संस्कृति, लामा बौद्ध धर्मको बारेमा खोजपूर्ण लेखिएको पाएँ । यो पुस्तकको आकारमा आएपछि विश्वका तामाङ सन्तानले अझ छलफल अनुसन्धान गरी आफ्नो तामाङ जातिको पहिचानलाई अमर राख्ने काम हुने विश्वास लिएको छु ।

यसरी नै तामाङ सन्तानका विद्वानहरुले तामाङ जातिको भाषा लिपि संस्कृति, संस्कार, लामा बौद्ध धर्मलाई कालान्तरसम्म जीवन्त राख्नु पर्छ भन्ने आफ्नो भावना प्रकट गर्दै यसरी सिमित श्रोत साधन समय खर्च गरेर आफ्नो जाति प्रतिको मांयाममता राखी सदासर्वदा काम गर्ने हौसला लेखक अजितमान तामाङ ज्यूलाई भगवान बुद्धले प्रदान गरुन भनी शुभकामना दिन चाहन्छु ।

*महेन्द्रजङ्ग तामाङ*

**केन्द्रिय उपाध्यक्ष**

नेपाल तामाङ घेदुङ

तापा-ला फाओ-व्हावा ताल्हो २८३८, याम्बु

# मन्तव्य



अजितमान तामाङज्यू तामाङ जातिका एक होनाहर प्रतिभा हुनुहुन्छ। वहाँ तामाङ जातिको भाषा, लिपिको बारेमा निक्कै रामो दखल राख्नुहुन्छ। वहाँका पत्रपत्रिका र यस पुस्तक बाहेक ८ वटा पुस्तक मध्ये तामाङ भाषा, लिपिको पहिचान र आलेखन प्रणाली सन् १९९७ र तामयीग सन् १९९८ को कृतिप्रति सिङ्गो तामाङ जाति बीच जुग-जुगसम्म वहाँ जीवित हुनु हुनेछ। यी ऐतिहासिक कृतिहरुपछि लेखकको "तामाङ जातिको मौखिक इतिहासका अवशेषहरु" नामको पुस्तक जुन प्रकाशित हुन गईरहेको छ, त्यो आफैमा एक प्रशंसनीय कार्य हो।

हुनत वास्तविक देश र जनताको इतिहास लेख्ने लेखकहरुको हाम्रो देशमा खडेरी नै छ। धेरै थोरै व्यक्तिहरुले मात्र "इतिहास" नामको राजा महाराजाको चाकडी गर्दै लेखिएको जीवन कहानी बाहेक जनताको पक्षमा लेखिएको वास्तविक "नेपालको इतिहास" कोर्न कलम चलाएको छ। यस परिपेक्षमा विचार गर्दा अजितमान तामाङज्यूले "तामाङहरुको जन जिब्रोमा रहेका कुराहरुलाई निकै कमीकमजोरीको बावजुद पनि तथ्य परक ढंगले टिपोटकै रुपमा भएपनि "तामाङ जातिको मौखिक इतिहासका अवशेषहरु" नामक एक ऐतिहासिक दस्तावेज लेख्ने कामको शुरुवात गर्नु भएको छ। यस कार्यप्रति म शुभकामना व्यक्त गर्दछु।

कमान सिंह लामा
काभ्रे
ल्हावा फाओी ता ल्हो-२००२

# ङला सेमताम



संसारमा प्रत्येक जीवात्माले गर्भाषय देखिनै जन्म र मृत्युसम्म संघर्ष विना जीवीत रहन सक्दैन। विचार विमर्शले नै संघर्षमा नयाँ कुराको प्रार्दुभाव हुन्छ। यस्तो भावनाहरु विभिन्न महापुरुषहरुका सिद्धान्तले चरितार्थ गर्दै आएको इतिहास साछि छ। तर नेपालमा भने २१ औं शताब्दीसम्म पनि इतिहासकार हरुको कलमले तामाङ राजा तथा राज्यहरुको बारेमा चित्रण नगरिनु विडम्बना नै हुन गएको छ।

गोर्खाको जनजाति राज्य आफ्नो पन्जामा पारे पश्चात जनजाति बाहुल्य बाइसी चौविसी राज्यहरु बल जफ्ती एकिकरणको कथित नाममा सयौं फूलहरु भएको भूमिलाई सिमित चारजात ३६ वर्ण भनेर वर्गिकरण गरियो। जो अद्यावधि प्रयोग गर्दै छन्। अनि आदिवासी/जनजातिहरु भने 'मुटुमाथि ढुंगा राखि हाँस्नु परेको छ'। अहिलेको प्रजातान्त्रिक जनतान्त्रिक भनिएको युगमा !

२५० वर्षपछि २००७ सालमा मिमिरएको प्रजातन्त्र २०१७ साल, २०३६ साल अनि २०४६ साल जनआन्दोलनको एकमात्र उपलब्धिले पुर्नवाहाली गरेता पनि आदिवासी/जनजातिहरुका लागि पशुपतिका भट्टको कानै चिरेको सावित भयो।

०४६ सालको अर्को उपलब्धि नेपालको संविधान भित्र नेपाल देश बहुजातीय, बहु भाषीय र बहुसंस्कृतिक भन्ने लेखेता पनि बहु धार्मिक भन्ने कटु यथार्थ शब्द भन्ने शब्द पार्न नसक्नु यो राष्ट्रकै दुर्भाग्य हो। परेको बहुभाषि र बहु जाति शब्द पनि ओझेलमै रहन पऱ्यो। त्यति मात्र कहाँ हो र ? अझ सर्बोच्च अदालतले त झन न्यायको नाममा संविधानमा उल्लेख बहुभाषा र राष्ट्रिय भाषा भन्नेहरुको मुखमा विर्को नै लगाइ दियो। यो भन्दा दुःदायी पिडा अरु के हुन सक्छ ? यस्तो पिडा जन्य अवस्थामा आीदावासी/जनजाति अनि तामाङ आदिवासीको यथार्थ भाषा साहित्य, इतिहास आदिको बारेमा प्रकाशमा ल्याउनु समेत कठिन छ।

तापनि तामाङ समाज र संगठन भित्र सुनि रहेकै नाम श्री अजितमान तामाङ। वहाँ नेपालको तामाङ जातिको एकमात्र राष्ट्रियस्तरको सबल सकृय सामाजिक संगठन नेपाल तामाङ घेदुङ र नेपालको आदिवासी जनजाति

पत्रकारहरुको संगठन नेपाल आदिवासी/जनजाति पत्रकार संघका केन्द्रिय समितिमा समेत आवद्ध हुनुहुन्छ । वहाँ स्पष्ट सृजनात्म विचारका धनी एवं तामाङ भाषा, लिपि, साहित्यको मात्र नभएर नेपालकै विद्वान लेखकहरु मध्ये एक हुनुहुन्छ ।

वहाँले हालै लेख्नुभएको "तामाङ जातिको मौखिक इतिहासका अवशेषहरु" पुस्तकको पाण्डुलिपि पढ्ने अवसर मैले पनि पाँए। चार अध्यायमा विभक्त रहेको सो पाण्डुलिपि पढ्दा गहन अध्ययन, मेहेनत पूर्वक खोजी, अनुसन्धान गरि इतिहासको गर्भमै लुकिछिपि रहेका धुप्रै महत्वपूर्ण नवीन जानकारीहरुलाई अजितमान तामाङ ज्यूले यस कृतिमा उजागर गरिदिनु भएको छ। मलाई लाग्छ यो कृतिले आगामी दिनमा नव पिंढीहरुलाई तामाङ जातिको इतिहासको खोजी गर्ने नयाँ बाटो खोलिदिएको छ । यो ग्रन्थ नेपालमामात्र नभएर विश्वभरि छरिएर रहेको तामाङ समाजलाई आफ्नो पूर्खाको गौरबपूर्ण इतिहास जान्न उपयोगि हुनेछ। त्यसैले तामाङ समाजको निम्ति श्री अजितमान तामाङज्यू अनेका-अनेक धन्यवादका पात्र हुनुभएको छ ।

मलाई आशा छ यो इतिहासको यथार्थतालाई तामाङ समाजको साथै नेपाली समाजले पनि स्वीकार्ने छ । म यो कृति र लेखक श्री अजितमान तामाङज्यूको धेरै बढाई चढाई गर्न चाहन्न नम्बरी सुनलाई कशी लगाइ रहनु नपर्ने हुन्छ। वहाँले यो भन्दा पहिले पनि आधादर्जन भन्दा बढी कृतिहरुको रचना गरिसक्नु भएको छ ।

म आशा गर्दछु वहाबाट भविष्यमा पनि यस्तै ज्ञानबर्धक, सूचना-मूलक, ऐतिहासिक तथ्यहरुको अध्ययन अनुसन्धान गरि थप कृतिहरुले भावी तामाङ सन्तती र नेपाली समाज लाभान्वीत हुनेछ। थुजेछे ।

(धन्यवाद)

*लामा धर्मराज दोङ तामाङ*
(केन्द्रिय सचिवालय सदस्य)
नेपाल तामाङ घेदुङ
तापा-ला, फाअी-फो ताल्हो, २८३२(DEC 2002)
फाबासीम्बु, याम्बु

## དང་ར་ CONTENTS विषय सूचि — ताअ /PageNo:

### प्रथम अध्याय

### ཏ་མང་ རྒུལ་པ་ལ་ ངོ་ཤེ་པ་
### तामाङ जातिको संक्षिप्त परिचय



### दोश्रो अध्याय

### ཏ་མང་ ཀེ་རབ་རི་ ཁ་པ་རྫོར་ལོ་ ཐེན་ ངོ་ཤེ་པ་
### तामाङ जातिको इतिहाससंग सम्बन्धि केही शब्दहरुको अर्थ

## དང་ར་CONTENTS विषय सूचि

ताअ /Page No:

## དཔང་ར་ CONTENTS विषय सूचि

ताअ /Page No:



## तेश्रो अध्याय

### ཏ་མང་ བཔ་ས་ བྱུང་ས་



## चौंथो अध्याय

### ཏ་མང་ ཐྲི་ ཕྱེན་ ཐྲེ་ས་ཀ་དི་

## ཏང་ར་ CONTENTS विषय सूचि ताअ /Page No:

## सहायक सामाग्री तामाङ नेपाली भाषा तर्फ


- पाख्रीन सन्तवीर- *ताम्बाकाइतेन क्लाइ रीमठीम*, सिलगुढी, दार्जीलिङ-तेश्रो स्स्करण-१९८३
- लामा, जि.डि.- *तामाङ च्युङनीला ठीमतेन तामछ्योइ*, गान्तोक, स्यारडेण्डोङ-सन १९८३
- तामाङ अजितमान- बरु ह्युल्सा, काठमाडौं-वि.स.२०५०
- योन्जन विद्यासागर- घिसिङ ग्याल्बो, कोनडोङडोङ मासिक, वर्ष-१, अङ्क-१, १९९३
- तामाङ विरेन्द्र- *याबेङ स्योङ*, नेपल तामाङ घेदुङ, काठमाण्डौ-वि.स.२०५४


## सहायक सामाग्री नेवार नेपालभाषा तर्फ


- श्रेष्ठ गंगालाल- *तामाङ स्वगलंछाय् पिहाँ बनेमाल तामाङत ? सन्ध्या टाइम्स दैनिक शुक्रवार तछलाथ्व-नेपाल सम्बत-१११७ (१९९८)*


## सहायक सामाग्री खस नेपाली भाषा तर्फ


- तामाङ सितारा- *'भोटे जातिको इतिहास- भूमिकाको रुपमा'* धुन्डेल-२०३३ साल, मंसिर
- शाक्य, धर्मरत्न- *'नुवाकोट जिल्लाको संक्षिप्त इतिहास'* २०३१?(बोमताङ-डक-१९९४मा संग्रह।
- शर्मा, बालचन्द्र- *'नेपालको ऐतिहासिक रुपरेखा'* -कृष्णकुमारी देवी, वारणसी-२०३३
- शर्मा,जनकलाल- *हाम्रो समाज एक अध्ययन*, साझा प्रकाशन, नेपाल, वि.स.२०३९
- सं.प्रो.भण्डारी ढुण्डिराज -*नेपालको इतिहासका पाँच स्वर्णिम पृष्ठ*, ने. रा. प्र.प्र.- २०३९
- नेगी तिलकबहादुर- *'तामाङ जातिको उत्पति र इतिहास'* ताभासविस.बुलेटिन-१, २०४०
- लामा लालबहादुर, मोक्तान चन्द्र कुमार- *तामाङ राजाहरुको छोटो जानकारी*-फुलबारी-०४२ पृ-२५
- कोइराला ठाकुरप्रशाद- *मनाङ*- नेपाल राजकिय प्रज्ञा प्रतिष्ठान-२०३८
- थापा चन्द्रबहादुर- *नेपाल राज्यको एकिकरण इतिहास*-(१७४२-१७९४ ई.), तनहुं-२०३९
- देवकोटा रत्नाकर -*कर्णालीको अथ-इति* सझा प्रकाशन काठमाडौं-२०४६
- तामाङ धर्मराज- *'धादिङ डाप्साङ चोको बाउीबा राजा'* छारम्हेन्दो वर्ष-१/अंक-२/पृ.१२/२०४८
- मोक्तान परमान सिं - *"तामाङ"* छारम्हेन्दो वर्ष-१, अंक-३-४ पृ-१६, -२०४८
- तामाङ अजितमान -*तामाङ भाषामा याम्बु(नेपाल)*- छारम्हेन्दो वर्ष-२,अंक-११/१२,,नेताथे- १९९२
- तामाङ सितारा- *तामाङ जनजातिको उद्गम इतिहास र राष्ट्रियताबार*,-वि.स.-२०४८
- योन्जन डी.बी.- *घले थर बारे एक चर्चा*, छारम्हेन्दो- बर्ष-२, अङ्क-६, सन १९९२
- तामाङ परशुराम- *तामाङ जाति*, नेपाल राजकिय प्रज्ञा प्रतिष्ठान,काठमाडौं-२०५१
- भक्तबहादुर ब्लोन -*तामाङ इतिहास (एक झलक)* रेणु ब्लोन, दावा छिरीङब्लोन-२०५१
- चेमजोङ, ईमानसींङ- *किरात इतिहास र संस्कृति*, खस भाषामा शेर ब.ई.थापा, अनु-२०५१
- डा.रेग्मी जगदीसचन्द्र- *काठमाण्डू शहर : सांस्कृतिक अध्ययन* टंगाल ढल्कु २०५१
- परशुराम तामाङ,-श्री स्वयम्भूज्योती रुपको उत्पति र तामाङ जनजाति ,छारम्हेन्दो,पृ.१०-११ वर्ष-३ म्हेन्दो-१५ जेठ, २०५१ नारायण सिंह लामा, हेटौंडा-१०,याम्बु ऐ ऐ छारम्हेन्दो
- बल प्रताप- *तामाङ थर खोज चचा*, काठमाडौं-सन १९९४
- स्योम्हेन्दो-वर्ष-७, पूर्णाङ्क-१५, काठमाण्डौ-सन १९९४
- मोक्तन परमान सिं- *यारकन्तदेखि झारखण्डसम्म, जाङ जातिको पहिचान*, बौद्ध-२०५३
- ट्राउस्चर गाब्रीयला- *'तामाङ इतिहासका श्रोतहरु'*, छारम्हेन्दो वर्ष-६, म्होन्दो-२१-१९९७
- तामाङ रविन्द्र- *तेमाल जात्रा*, लास्सोथेत्मा काठमाडौं-वि.स.२०५४
- न्यौपाने गोविन्द- *नेपालको जातीय प्रश्न-सामाजिक बनोट र साझेदारीको सम्भावना,*

२०००, थापाथली काठमाण्डौ ।

- शेर्पा निमा छिरिङ-'गुरु रिन्पोछे', बुद्धंशरणं गच्छामि, लेबोङ,दार्जीलिङ-सन २०००
- थापामगर प्रदिप -'को हुन् ती जात फेर्नेहरु ? जिल्ला फाउण्डेशन, ललितपुर-२००१
- तामाङ अजितमान -'तामाङ भाषा र तामयीग तामाङ लिपि परिचय', ह्याङला छारग्याम, त्रैमासिक, काठमाण्डौं, वर्ष-१,अंङ्क-१,सन् २००१,
- तामाङ रविन्द्र-*तामाङ इतिहासको रुपरेखा,* ने.मं म. ता. सेवा गु., मकवानपुर,-२०५८
- तामाङ साङ दोर्जे घिसिङ- *घिसिङहरुको ऐतिहासिक थलो ताल्च्यो गढी*-ह्युल्सा त्रैमासिक-वर्ष-१, अंक-१, (पृ.१६ - १८) बैशाख-२०५८,
- जिम्बा डि.टि.-*तामाङ जातिको इतिहास अनि ताम्बाको चाङबाङ,* दार्जीलिङ-सन-२००२
- लामा एस.एन.डी. -'*मुर्मी र तामाङ'* -ज्योज्यो वर्ष-२, अंङ्क-२, पसी, दक्षिण, सिक्किम-२००२
- हागन टोनी -'*नेपालको चिनारी'* -हिमाल किताब पाटन ढोका, ललितपुर-२००२
- सुयल'रणबहादुरथापा '*हाम्रो हिमाली जाडान सम्पदा: सु-सम्वर्द्धनको आवश्यकता'* हाम्रो सम्पदा राष्ट्रिय-मासिक-वर्ष-२,अंक-४, काठ-२०५९

## सहायक सामाग्री अंग्रेजी भाषा तर्फ

- Dor Bahadur Bista - *Peoples OF NEPAL*-1967
- *'A HAND BOOK OF TIBETAN'* KGYU DHARMA PUBLICATIONS-Visva Bharati University, India-1976
- Dr. yonzon G.S. *Enthnographic Notes on The Tamangs*, Darjeeling India.2-3rd, June – 1984
- Tamang Family Research Prroject–Report to the CNAS, TU -May - 1991
- Tamang Parshuram, *The Tamangs A Face of Nepal*-JAN. 1992 (2048)
- Holmberg H. David- *"Order In Paradox"* Cornell, University-1989, Delhi-1996
- Gabriele Tautscher, *The Five Tamang Ancesters and Sailung Phoi Sibda Karpo*- vienna 1997
- Office of the Dalai Lama *A Brief History of Tibet*, Dharmashala-1997
- Singh Haris Chandra Lal- *The Origin of Tamang*, Bhodhi Bhavana Bi-monthly, Darjeeling, vol-I, No-II, June-August-2000
- तामाङ जगतबहादुर - संकलक, बुङताङ डक्-१९९४
- दास सरत चन्द्र-*तिब्बेतियन इङ्गलिस डिक्सनरी,* दिल्ली-१९९१ र कम्प्यक्ट भर्सन सन १९९५
- रिस्ले एचएच-*ग्याजिटिएर अफ सिक्किम,* दिल्ली-१९९६
- अलेक्जेन्डर म्याकडोनाल्ड- *एसे अन द इथ्नोलग अफ नेपाल एण्ड साउथ एसिया*-१९७५, रत्नपुस्तक भण्डार, काठमाडौं, सन १९८३, १९८५

☺ मौखिक जानकारी उपलब्ध गराउने- *गाम्बा, ताम्बाहरु :- १. सतल्सीं तामाङ, बुङताङ, हुंगबहादुर तामाङ, रेमबहादुर तामाङ बोमताङ, २.फुरमान योन्जन, सेमजोङ चौतार । र धनसुर बाओीबा गओीरा धादिङ, ३. ताम्बा, ब्र्योओी नाम्गेल तामाङ, सिवालय काभ्रे ४. रत्नबज्र लामा, रिस्याङ्गु, ५. मार्का तम्माङ, बोराङ* ६. रत्नबज्र लामा, पुण्य बज्र लामा ह्रीस्याङगु, सिन्धुपाल्चोक



नोटः नेपालको ऐतिहासिक रुपरेखा भन्ने पुस्तकको पाना नं ३९ मा बालचन्द्र शर्मा ज्यूले प्रस्तुत गर्नु भएको यस नेपालको जातीय स्थिती दर्शाउने नक्सामा तामाङ /मुर्मी /लामा जातिको जडान/जड्यान जाड प्रदेश स्पष्टसंग देखाइएको हुँदा जानकारीको लागि साभार गरिएको हो ।

# व्यक्तिवृत

नाम :अजितमान तामाङ

पिताको नाम :जगतबहादुर तामाङ, आमा :सेलजोम तामाङ

जन्म मिति :अप्रिल १९ सन १९७०

जन्मस्थान:प.नं.-१, नुवाकोट, बोङताङ, पेशा : नोकरी,

शिक्षा : स्नातक (त्रि.वि. नेपाल)

समाजसेवा क्षेत्र: सचिव, नेपाल तामाङ घेदुङ, महासचिव, नेपाल आदिवासी/जनजाति पत्रकार संघ केन्द्रिय समिति, आजिवन-सदस्य भाषा वैज्ञानिक समाज, नेपाल (त्रि.वि.)

भाषागत शिप : *तामाङ नेपालीभाषा, नेवार नेपाली नेपालभाषा(नेवार भाषा), नेपाल सरकार कामकाजि भाषा खस नेपाली, भारतीय भाषा हिन्दी, अन्तराष्ट्रियभाषा अंग्रेजी र समान्य चाइनिज हान भाषा*

मुख्य मुख्य राष्ट्रिय तथा अन्तराष्ट्रिय गोष्ठि तथा सभाहरुमा सहभागि:

1. 5TH INTERNATIONAL CONFERENCE INEB, FEB 1993, BANGKOK, THAILAND
2. NATIONAL SYMPOSIUM ON PROBLEMS AND SOLUTIONS OF THE IP LANGUAGE OF NEPAL, KATHMANDU, 15-16, 1993.
3. FIRST INT 'L TAMANG IP LANGUAGE & SCRIP SYMPOSIUM 16-17 DEC-1995 GANGTOK, SIKKIM
4. INTERNATIONAL ALLIANCE OF INDIGENOUS TRIBLE PEOPLES OF THE TROPICAL FORESTS SOUTH ASIA REGIONAL MEETING, 29-30 MAY 1998, NAGARKOT NEPAL.
5. NATIONAL CONSULTATION ON THE ESTABLISHMEN OF PERMANENT FORUM FOR IP PEOPLES IN UN SYSTEM SEP. 1998 KATHMANDU
6. 14TH CONFERENCE OF ALL INDIA TAMANG BUDDHIST ASSOCIATION, 23-25 JAN. 1999. NAMCHI, SIKKIM
7. INTERNATIONAL FIFTH HIMALAYAN LANGUAGE SYMPOSIUM, 13-15, SEP. 1999, KATHMANDU, NEPAL
8. NATIONAL CONSULTATION ON THE RIGHTS OF INDIGENOUS PEOPLE, SEP. 1999 KATHMANDU, NEPAL
9. ASIAN WORKSHOP ON PERMANENT FORUM IN UN, 22-26, SEP. 1999 INDORE, INDIA
10. INTERNATIONAL ALLIANCE OF INDIGENOUS TRIBLE PEOPLES OF THE TROPICAL FORESTS THE SOUTH ASIA REGIONAL WORKSHO, WARANGAL 4-7OCT.2000 ANDHRA PRADESH, INDIA
11. NATIONAL CONSULTATION ON INTEGRATED STRATEGIES FOR PROMOTING THE RIGHTS OF INDIGENOUS PEOPLES IN NEPAL 16-20 JANUARY 2000, KATHMANDU
12. NATIONAL CONFERENCE ON LANGUAGE RIGHTS 16-17 MARCH2000, KTM
13. INTERNATIONAL BUDDHIST CONFERENCE,1-2 FEB.2001. LUMBINI, NEPAL
14. UN WGIP 19TH SESSION 23- 27 JULY 2001.GENEVA SWIZERLAND
15. ASIAN REGIONAL CONFERENCE TO NOMINATE ASIAN INDIGENOUS PEOPLES REPRESENTATIVES TO THE UNITED NATIONS PERMANENT FORUM ON INDIGENOUS ISSUES,18-19 AUG 2001 DHULIKHEL, NEPAL
16. WORLD CONFERENCE AGAINST RACISM 27 AUG-SEP 8, 2001DURBAN S.A.
17. 17TH CONFERENCE OF ALL INDIA TAMANG BUDDHIST ASSOCIATION, CHALSA, 23-25 JANUARY, 2002,WESTBENGAL INDIA,
18. SYMPOSIUM ON SOCIAL HISTORY OF TAMANG PEOPLES -AITBA DARJEELING 7TH JULY 2002.

# प्रथम अध्याय

## ཏ་མང་ལ་ ཏུན་པ་ ངོ་སེ་པ་
## तामाङ जातिको पहिचान सारांसः




## ཕྲང་པ་ ཁེང་མོ་ विषय प्रवेश :-

तामाङ जातिको इतिहास भन्नाले तामाङ जातिको यो धरतीमा उत्पति, बसोबास, सभ्यताको विकास, धर्म, संस्कृति, संस्कार, भाषा र लिपि, वेशभूषा आदिको हालसम्म विभिन्न काल परिस्थितिहरु बीच उतार चढावहरुको समष्टि चरणबद्ध रुपलाई बुझिन्छ । तर आज एकाइशौं शताब्दीमा प्रवेश गरी सक्दासम्म तामाङ जातिको आफ्नो केन्द्रकृत राज्यसत्ता तथा स्थानीय कविला गणराज्यहरु पनि विलिन भइ सकेको कारण आज थुप्रै तामाङका ऐतिहासिक पहिचानहरु दिन प्रतिदिन लोप भइरहेका छन् । तिनको अवशेष समेत पाउन मुस्किल हुँदै गइ रहेको छ । तामाङ जातिको इतिहासको कुरागर्दा प्रारम्भ गर्नुनै कठिन छ। विभिन्न रुपमा छरिएर रहेका तामाङ इतिहासका तथ्यहरुको संग्रहगरी नव इतिहासको रचना गर्नु पर्ने हुन्छ। यो कार्य पूरागर्न हाल उपलब्ध रहेका आधारभूत ऐतिहासिक सामग्री र तथ्यहरुको सूक्ष्म अध्ययन र विश्लेषण आवश्यक छ। तामाङ इतिहास लेख्नका लागि मौखिक कथनहरुलाई हाल मौजुदा रहेको भग्नावशेषहरुको साथमा राखेर कण-कणमा पसेर, सूक्ष्म र विस्तृत अध्ययन गर्नु जरुरी छ । तामाङ जातिको भावी विकास र उन्नतिको योजनाहरु तयार गर्न हामीलाई विगतको इतिकासको केही न केही यथार्थ वस्तुस्थितीको जानकारी चाहिन्छ । त्यसको आंशिक आवश्यकता परिपूर्ति होस् भन्ने उद्देश्यले

विभिन्न तामाङ प्रदेशको भम्रणको क्रममा उपलब्ध भएका कथन, तामाङ पुरातात्विक भग्नावशेषहरु, पत्र-पत्रिका, पुस्तकादिमा प्रकाशित भएका लेख, रचनादि तामाङ जातिको प्राय: मौखिक रुपमा रहेको इतिहासलाई आधार मानि विश्लेषण गरि लिखितमा उतार्ने जमर्को गरिएको छ। इतिहासको कुरा गर्नु अघि तामाङको जातीय पहिचान बारे जान्नु आवश्यक हुन्छ। तसर्थ यहाँ तामाङ जातिका पहिचानहरु मौलिक भाषा लिपि, बसोबास क्षेत्र, वेशभूषा, धर्म संस्कृति आदिको बारेमा संक्षिप्तमा जानकारी प्रस्तुत गरिएको छ।

## तामाङ जातिका पहिचान लुगाको विविधता







माथिको फोटोमा क्रमस:
१. गादा/ग्या, स्यामा लगाएको तामाङ युवा युवतीहरु (म्हेन्दोमाया समुह २. ल्होछारमा तामाङ युवा युवतीहरु दोर्मो, सुकाअी, तोदुग सुरदाम अनि डम्फाको साथमा नाच्दै ,३. र सुवा गोल्जोङ्का तामाङ पुरुष स्याल्दो, सुदाम र स्योदे(कुलागी) लगाएको ४. तामाङ लुगा स्यामा बुन्दै गरेकी तामाङ महिला, ५. तामाङ युवा डम्फा, गोजा, खेन्ज्या, स्योदे (कुलागी/तागी लुगामा सजिएको

(कु-पार-२)

# ད་མང་ལ་ ངོ་ཤེ་པ་ तामाङ जातीय पहिचान

तामाङ जाति भनेर चिनाउने भाषा लिपि, संस्कृति, धर्म, संस्कार, रितिरिवाजहरुनै तामाङ जातिका पहिचान (Identity) हुन् । तसर्थ तामाङ भाषा, लिपि, धर्म, संस्कृति, संस्कार, वेशभूषाहरु तथा तामाङहरुले ओगटि राखेको भूभागहरु सबै तामाङ जातिलाई पहिचान दिने तामाङ निधिहरु हुन् ।

तामाङ जातिको इतिहासको गर्दा यी विषयहरु बारे जान्नु आवश्यक ठानी यहाँ संक्षेपमा प्रस्तुत गरिएको छ ।

## (ग) དམ་ས་ལིང་ **ताम्सालीङ (तामाङ भूमि)**

तामाङ जाति नेपालको एक पुरानो आदिवासी जाति हो । नेपाल भूमिको भूमिपुत्र तामाङहरुले ओगटिराखेको सम्पूर्ण प्राचीन तामाङ क्षेत्रनै *ताम्सालीङ* हो । यो *ताम्सालीङ* भूमिलाई "*तामाङ सालीङ*" भन्ने गरिन्छ । हिमाली उच्च उपत्यकादेखि, मध्य पहाड, महाभारत श्रृंखला, चुरे पर्वत अनि चुरेदुनको समतल भूभागसम्मको रहनसहनमा तामाङ जातिको बासस्थान तथा कर्म भूमि रहेको छ । तामाङहरु यो भूमिमा कहिलेदेखि आए भन्ने आधिकारिक तथ्य प्राप्त छैन । तर अधिकांश मानवशास्त्री तथा इतिहासकारहरुले नेपाल आगमन गर्ने प्रथम मानव जाति मध्ये मंगोल मूलको आदिवासी तामाङ रहेको उल्लेख गरेका छन् । तामाङहरुले नेपालभरी (नेपालको १४ अञ्चल र ७५ वटै जिल्लामा) नै कुनै नः कुनै संख्यामा बसोबास गरेको पाइन्छ ।

पूर्वमा खम्बुवान, लिम्बूवान, अनि पश्चिममा 'मगरात' भने झैं तामाङहरुको मुख्य बसोबास क्षेत्र तथा मौलिक प्राचीन भूमि 'जडान्' हो ।[1] तामाङ जातिको आगमन तथा फैलावट वंशावली अनुसार सामदेनलीङ (मंगोलीया), अफगानिस्तानको

[1] तामाङ जाति- पृष्ठ-५ "....खसहरुले भोटे जातिको जडान राज्यको दक्षिणी भागमा कब्जागरी खस राज्य खडा गरेका थिए । त्यसैले उत्तरमा जडान नै कायम थियो । ....."

काबुल (कमरलीङ), पाकिस्तानको पेशावर, अनि काश्मीर, ल्हासा(खाम छ्योंअीलीङ), वेतीया(बेतालीङ), लंका(सांगालीङ), बर्मा(अमरलीङ), बंगाल(बंगालीङ)सम्म फैलिएको वर्णन पाइन्छ । यिनै भूभागलाई जडान नामले चिनिन्छ, यो सम्पूर्ण भूमि नै प्राचीन *ताम्सालीङ* हो । अहिले *ताम्सालीङ* सङकुचन भएर नेपालको हिमालय पहाडश्रृंखला कर्णाली अन्चलदेखि पूर्वमा दुधकोशीसम्म रहेको छ । काठमाण्डौ उपत्यकालाई केन्द्र बिन्दू बनाएर वरिपरीको जिल्लाहरुमा तामाङ जातिको सर्वाधिक जनघनत्व रहेको छ । तामाङ जाति जनसंख्याको दृष्टिकोणले मकवानपुर जिल्ला र भाषिक बाहुल्यता भएको जिल्ला रसुवा हो । धादिङ, नुवाकोट, काभ्रे, सिन्धुपाल्चोक, सिन्धुली, दोलखा, रामेछाप आदिं जिल्लामा तामाङ जातिको घनत्व अत्यधिक छ । राजनैतिक रुपमा पनि बर्तमान नेपालको यी जिल्लाहरुलाई मुख्य तामाङ भूमि मानेर क्षेत्रिय जातीय प्रान्तीय स्वरुपका स्वयत्तताको राजनैतिक मागहरु अघिसारिएका छन् ।

अहिलेको ताम्सालीङको मुख्य भूमि वा क्षेत्र पनि यही हो । यही क्षेत्र अहिले नेपालको तामाङ जातिको पहिचान दिने भूमिको रुपमा स्थापित भएका छ । नेपालमा नेपालका तामाङहरुले आफ्नो जातीय पहिचानको संरक्षण संवर्द्धन गर्न 'नेपाल तामाङ घेदुङ' नामक समाजिक संगठन खोलेका छन् । ताम्सालीङका तामाङहरु, नेपाल बाहेक चीनको स्वशासित क्षेत्र तिब्बतको आम्दो, खाम, केराङ, सीगात्सेसम्म, भारतको पश्चिम बंगालका कोलकाता, दार्जीलीङ, सिक्किम, अरुणाञ्चल, उत्तरपूर्वका राज्यहरु असम, मेघालय हुँदै बर्मासम्म आर्थात प्राचीन जडानको सुदूरपूर्व क्षेत्रसम्म फैलिएको छ । बर्मा र थाईल्याण्डको सिमामा थाइ तामाङहरु पनि रहेको सुनिएको छ ।

नेपालपछि ठूलो संख्यामा तामाङ जातिको बस्ती भएको देश भारत हो । तामाङहरु भारतमा आजभन्दा सयौं वर्ष पहिलेदेखि आइरहेका छन् । भारतमा तामाङहरुको आफ्नो छुट्टै इतिहास, भू-पहिचान स्थापना भइसकेको छ भने भारतको सिक्किममा तामाङ भाषा, लिपि, धर्म, संस्कृति आदिले आज भारतीय तामाङको रुपमा अलग्गै पहिचान लिएर रहेको छ । भारत भरि को तामाङहरु 'अखिल भारतीय तामाङ बौद्ध संघ' नामक संस्थामा संगठित भएका छन् ।

तामाङहरुले अमेरिका, बेलायत, अष्ट्रेलिया, हङकङ आदि देशहरुमा विगत पाँच दशक पहिलेदेखि नै बसोबास गरि आएको पाइन्छ । त्यहाँ पनि उनिहरु आफ्नो पहीचानको खोजीमा संगठित भइसकेका छन् । आजभोलि सानै संख्यामा भए पनि अमेरिका, अष्ट्रेलियामा पुगेर स्थायी बसोबास गरेका तामाङहरुले आफ्नो जातीय संगठन खोलेका छन् । उदाहरणको लागि अमेरिकामा हालै "तामाङ घेदुङ अमेरिका" खोलेका छन् र अमेरिकी तामाङहरुले इन्टरनेटमा तामाङ आवर फेमलि डट कम नामक वेभ साईट समेत खोलेका छन् ।



| नेपालमा तामाङ भाषाको स्थान र नेपालको अन्य मुख्य मातृभाषाहरु जनगणना-२०११ को अधारमा हेर्दा | | |
|---|---|---|
| खस नेपाली | ४८.७० | प्रतिशत |
| तामाङ | ६.०० | " |
| थारु | ४.४० | " |
| नेवारी | ४.७० | " |
| मैथिली | ३.७० | " |
| राई | २.९० | " |
| गुरुङ | २.०० | " |
| लिम्बु | १.८० | " |
| हिन्दी | १.०० | " |

टिप्पणी :- यो तथ्यांक अनुसार नेपाल उत्पति भाषाहरु मध्ये पहिलो ठूलो जनसंख्याले बोल्ने भाषा तामाङ भाषा हो। यो जनगणनाले नेपालमा ५१.३० प्रतिशत जनताले खस उर्फ गोर्खा अहिले सरकारी कामकाजी (नेपाली) भाषा बुझ्दैनन अर्थात नेपालको आधा भन्दा बढी जनसंख्याले छुट्टै आफ्नो मातृभाषा बोल्छन् भन्ने स्पष्ट पारेको छ। यही तथ्यांकमा पनि मिथिला क्षेत्रमा बोलिने भाषाहरुलाई अघि सारेर तामाङ भाषालाई तेश्रो स्थानमा पुऱ्याउने प्रयास गरिएको छ। (तालिका-१)

## (ग) [Tibetan-script text] जनसंख्या

बहुजाति, बहुभाषिक, बहुसांस्कृतिक, वहुधार्मिक देश नेपालको ६० भन्दा बढी आदिवासी मध्ये तुलनात्मक रुपमा अन्य जातिहरुको भन्दा तामाङ जातिको जनसंख्या धेरै छ। नेपालमा नेपालको जनगणना सन् १९९१ ले कूल १०, १८,२५२ अर्थात ५.५१ प्रतिशत देखाएका छन्। सन २००१ को जनगणनाले नेपालमा तामाङहरु बाह्र लाख पुगेको देखाएको छ भने स्वयं तामाङहरुले भने २० देखि ४० लाखसम्म हुनु पर्दछ भन्ने दावी गर्दछन्। तामाङहरुको जनसंख्या भारतमा पनि उल्लेखनीय छ। तामाङको संख्या सन् १९५७ मै ४९००० दार्जीलिङमा (तामाङ जाति:२०५१:३५) र सिक्किममा ३२०० जना रहेको छ (गजिटिएर अफ सिक्कि:१९९५:२७)। यो संख्या अहिले आएर ३०,००० मा नाघिसकेको छ।

भारत स्थित तामाङ जातीय संगठन, अखिल भारतीय तामाङ बौद्ध संघले भारतमा मात्र तामाङहरुको संख्या १५ लाखभन्दा बढी रहेको दावी गरेको छ जसमध्ये पूर्व उत्तर राज्यमामात्र ६ लाख भन्दा बढी संख्यामा तामाङ जनसंख्या रहेको कुरा अखिल भारतीय तामाङ बौद्ध संघ पूर्वान्चलका दिलाराम योन्जन बताउनु हुन्छ।

## (घ) ད་མང་སྒྱོད་ ཞེན་ ད་མ་ཡིག तामाङ भाषा र तामयीग लिपि

तामाङहरुले आफ्नो भाव एक आपसमा आदान प्रदान गर्न प्रयोग गरिने तामाङ बोली, तामाङ ताम, तामाङ लेङमो, तामाङ कात वा काओीलाई तामाङ ग्योत या तामाङ ग्योओी भनिन्छ । भाषा वैज्ञानिकहरुले तामाङहरुको तामाङ भाषालाई चिनिया एकाक्षरी परिवार भित्रका तीन भाषा परिवार मध्ये भोटबर्मेली शाखा भित्रको भोट हिमाली परिवार अन्तरगत वर्गिकरण गरेका छन् । तामाङभाषा नेपालमा बोलिने टिबेटो बर्मन भाषाहरु मध्ये सबैभन्दा धेरैवक्ता भएको जीवित भाषा हो । तामाङ भाषाको विदेशीहरुले सन् १८२८ देखिनै अध्ययन अनुसन्धान गरि आएको देखिन्छ । तामाङ भाषालाई *मुर्मी, भटिया, ईसाङ, कागते, योल्मो, ग्ले-भोटे( घलेभोटे), लामाभोटे* आदि भन्ने गरेको पाइन्छ । २०४८ सालको जनगणनाले तामाङभाषिको संख्या ९०४,-४५६ अर्थात ४.९ प्रतिशत देखाइएको छ भने सन २००१ को जनगणनाको तथ्यांक अनुसार ११ लाख ७९ हजार १ सय ४५ जना तामाङ भाषा बोल्नेहरुको संख्या सर्वजानिक गरेको छ सो अनुसार जनसंख्या ९२ प्रतिशतले तामाङ भाषा बोली रहेको देखाएको छ [2]। नेपालको जनगणना २००१ ले नेपालमा बोलिने भोट हिमाली भाषाहरु मध्ये सबै भन्दा धेरै तामाङ भाषा ५.९० प्रतिशत संख्या प्रस्तुत गरेको छ ।

नेपालको गोर्खा, लमजुङ, धादिङ, नुवाकोट, रसुवा, ललितपुर, भक्तपुर, काठमाण्डौ, काभ्रे, सिन्धुपाल्चोक, सिन्धुली, रामेछाप, दोलखा आदि जिल्लाहरुमा तामाङ भाषा वाहेक अरु भाषा फुट्टी नजान्ने तामाङहरु अझै पाईन्छन ।

तामाङहरु आफ्नो पुर्ख्यौली, वंशावली, धर्म, संस्कारको महत्वपूर्ण ग्रन्थहरु लिपिबद्ध लिपिलाई तामाङ लिपिको रुपमा गर्व गर्दछन् र यो लिपिलाई तामाङ भाषामा *"तामयीग"* लिपि भनिन्छ । यो लिपि नेपालमा भारतीय देवनागरीपछिको व्यापक रुपमा प्रयोग हुने ठूलो जनसमुदायले अंगालेको लिपि हो । यो लिपिलाई ईन्टर नेटको माध्यमबाट सजिलै (sama, u-chan, Lplain आदि सर्च गरेर ) प्राप्त गर्न सकिन्छ । यो लिपिमा तामाङ जातिको ऐतिहासिक ग्रन्थहरु *कुम्पा खाछ्योओी, जीग्तेन ताम छ्योओी, हुओीछेन च्योप्पो, ह्रामा, दोङराप, ठुङराप, लोन्पो डुक की तेन्छ्योओी, तामाङ च्युङीला ठङुसा बन्सा, केराप, फाराप* आदि वंशावलीहरु र हस्त लिखित पुस्तकहरु पाइएका छन् । यो ग्रन्थहरुको भाषा, लिपि र लेख्य शैलीको अध्ययन गर्दा यो लिपिमा तामाङ भाषालाई तामाङहरुले लामा बौद्धधर्म ग्रहणकालदेखि नै लेख्न आरम्भ गरिसकेको कुरा अनुमान गर्न सकिन्छ । आधुनिक मुद्रण प्रणालीबाट मुद्रित

[2] नेपालको जनगणना २००१को रिपोर्ट के.त.वि.(CBS, HMGN Report 2001) श्री ५को सरकार

प्रथम तामाङ भाषाका देवनागरी लिपिमा लेखिएको बुद्धिमान मोक्तानद्वारा लिखित *"जिक्तेन ताम छ्योअी"* र सन्तविर पाखिनको *"ताम्बा काअीतेन क्राअी रीमठीम"* पुस्तकहरुको मूल श्रोत समाग्रीको रुपमा यही लिपिमा लेखिएका हस्त लिखित ग्रन्थहरु नै थिए ।

हाल भारतको सिक्किममा सरकारी स्तरमानै यो लिपिमा तामाङ भाषाको कक्षा १ को पाठ्पुस्तक प्रकाशित भई कक्षा संञ्चालन भइसकेको छ साथै *सिक्किम हेराल्ड* नामको सरकारी पत्रिका पनि तामयीग लिपिमा प्रकाशन भइरहेको छ । नेपालमा पनि *कोनडोडडोड, जाम्बुलीड* साप्ताहिक जस्ता पत्रिकाहरु यो लिपिमा प्रकाशन भएको छ । लामा धर्मराज तामाङका *"लाबोन र मेबोन"* नामका दुई लघु कविता संग्रह र अजितमान तामाङको *"तामाङ ताम्पे (तामाङ उखान टुक्का संग्रह), जोम क्लाङ/ओम क्लाङ/कोच्चा क्लाङ (तामाङ गाउँखाने कथा संग्रह) तथा तामाङ तामयीग"* जस्ता पुस्तिकाहरु प्रकाशित भएका छन् । तामाङ भाषाको संक्षणको लागि साहित्यको रचना हुनुपर्छ भन्ने भावनाले तामाङ युवाहरुले कथा, कविता आदि विधामा फाट्टफुट्ट रुपमा पुस्तिकाहरु बर्षेनी प्रकाशित गरिरहेका छन् । त्यसरी नै तामाङै भाषामा साप्ताहिक समाचार पत्रिका तथा मासिक, द्वैमासिक, त्रैमासिक आदि पत्रिकाहरु पनि प्रकाशनमा आइसकेको छन् । तामाङ भाषा छापा अर्थात छपाई माध्यममात्र नभएर संञ्चारका विद्युतीय संञ्चार माध्यमहरु रेडियो नेपालमा ५ मिनटको दैनिक समाचार र १५ मिनटको साप्ताहिक कार्यक्रम, काठमाण्डौ महानगर पालिकाको मेट्रो एफ.एम.रेडियोमा दैनिक आधाघण्टाको कार्यक्रम, रेडियो एच.बि.सी. एफ.एम.मा साप्ताहिक आधा घण्टाको रेडियो कार्यक्रम प्रशारण भइरहेका छन् ।

तामाङ भाषाको व्याकरणको रचना तथा लेखनको सवालमा भने भाषा विज्ञहरुले खोज अनुसन्धानको अभिलेख तथा नेपाली भाषाको व्याकरणसंग तुलनात्मक अध्ययन तथा अनुवाद बाहेक समष्टि तामाङ भाषाको व्याकरण हालसम्म लेखिएको छैन । वैज्ञानिक लेख्य परम्पराको विकास, लेखनशैलीको एकरुपताको अभाव र वास्तविक तामाङ भाषाको गहीराईमा पुगेर भाषिकाहरुको पहिचान नभएकोले भौगोलिक विविधतासँगै तामाङ भाषाको विविधतालाई साधारण वक्ताहरुमा तामाङ भाषिकाहरु बीचको दुरी धेर भएको महशुस भइरहेको छ । तापनि सबै क्षेत्रको तामाङ भाषाको एकरुपताको निम्ति क्रियागत संरचना (Verble formation)लाई सबल आधार एवं मेरुदण्डकै रुपमा लिन सक्ने देखिएको छ। किनभने प्राय: सबै क्षेत्रमा बोलिने तामाङ भाषाको सामान्यकृयामा आजसम्म खासै भिन्नता भेटिएको छैन ।

यसले गर्दा तामाङहरु जति सुकै टाढासम्म फैलिएर बसेको भएतापनि भाषाले एक आपस्तमा सजिलै तामाङ भनेर चिनाएको छ । नेपालमा मात्र नभएर भारतका असम र सिक्किमका कतिपय बस्तीहरुमा अझै तामाङ भाषामात्र बोल्ने तामाङहरु पाईन्छ । आज तामाङ जातिलाई तामाङ भनेर चिनाउने सबै भन्दा महत्वपूर्ण पहिचान *तामाङ भाषा र लिपि* भएको छ ।




सुर्काअी र
फेन्का ग्या

## (८) ད་མང་ ཕྱན་ ཀྭན་

## तामाङ लुगा अर्थात भेषभुषा :-

तामाङ जातिको मौलिक पहिचानहरु मध्ये लगाउने लुगापनि एक हो । तामाङ जातिको प्राचीन लुगा अल्लोबाट बुनेको फेन्का(ग्या) घलेकनै हो । यो काँधमा गांठो पारेर पुरुष तथा महिलाले लगाउने घलेक आजभोली भने महिलाले मात्र लगाउने गरेको पाइन्छ । तामाङ जातिको मौलिक *ग्या/ गादो वा गातो (घलेक)* यो लुगालाई तामाङ वंशावलीमा वर्णन गरिएको सम्पूर्ण तामाङ क्षेत्र अर्थात पश्चिममा काश्मीर, लदाखसम्म, पूर्वमा बर्मादेखि लेप्चा( सिक्किमी), डुक्पा (भूटानी), महिलाहरुले आजभोली पनि आफ्नो मौलिक लुगाको रुपमा गर्वका साथ लगाइरहेका छन् । त्यस्तै पश्चिम नेपालका मगर गरुङ, दुरा, थारु, खस लगायत जंगलका घुमन्ते जाति राउटेहरुले पनि ग्या(गादो)लगाउने गरेको पाइन्छ । यसरी हेर्दा यो लुगा (ग्या/गादो)लगाइलाई मंगोल मूलका हिमालय पहाडी जातिको मौलिक लुगाको रुपमा लिन सकिन्छ । तामाङहरुले लगाउने लुगाको कुरागर्दा बुढी गण्डकी र त्रिशूली नदीको बीचको भागका तामाङ जातिले बुन्ने सुती तथा उनी लुगाहरु नेपालकै आदिवासी/जनजातिहरुमा मौलिक र सर्वोत्कृष्ट पाइन्छ । यहाँका तामाङहरुले आफैले कपासबाट धागो कात्नु, र गाएर विभिन्न ढाँचाका पुरुष तथा महिलाहरुले लगाउने लुगा बुन्दछन् । त्यस मध्ये आधुनिक लुंगी जस्तो स्यामा, घलेकको रुपमा 'बर्को-ग्या, तोकरोक-ग्या(म्लाङ, तार, ठेंवा, अुर, वाला-पुरुष र महिला दुवैलाई हुने), फेन्का-ग्या (अल्लोको पुरुषघलेक) खादी-ग्या (पुरुषघलेक) पटुकी (तार, डोको फुकी/के, पाअीकी म्लाङ के/फुकी (पुरुष तथा महिला), टोकोरो (रातो भूंइमा सेतो, हरियो, पहेंलो, नीलो, कालो मसिनो धर्के बुनेको सुतीको फेटा), तोकाअी, सुर्काअी(लुकुनी/बक्खु), स्योल्दो


(कु-पार-४)

डाम्फा देन
ब्योन छाम




(डांग्री), स्योदे/तागी/कुलागी(टोपी महिला र पुरुषको), ग्याप्टुल/पाङदेन, दोर्मो, हाङरे, सुरलुङ/सुरदाम, खेन्ज्यार, तोदुग आदि तामाङको आफ्नै मौलिक लुगाहरु हुन्। फेन्काको गादो लगाए भ्रै पुका(खाँडी) पनि तामाङहरुमा बुन्ने तथा लगाउने गरिन्छ। आजभोलि भन्दा २० वर्ष अगाडीसम्म लगाइने तामाङ लुगाहरु पूर्ण रुपमा हराई सकेको छ भने अन्य लुगाहरु पनि धेरै जसो अवशेषको रुपमा मात्र भेटिन्छन। तामाङ लुगाको संरक्षण र विकासका लागि लुगाको



भारतका तामाङहरु तामाङ लुगामा

नवीनतम् रुपको विकास गरि नेपाल तामाङ घेदुङ र सिक्किम तामाङ बौद्ध संघ र अ.भा.ता. बौ.संघहरुले आफ्नो महानचाड ल्होछार लगायत अधिवेशनहरुमा तामाङ लुगा लगाउने तथा प्रदर्शन गर्ने गरि आएकका छन।




(तामाङ गोन्पा, उर्लाबारी, मोरङ, नेपाल)

**(ङ) ཏ་མང་ ཆོས་ तामाङ धर्म** :तामाङहरु आफूलाई जन्मजात (By-Birth) बौद्ध धर्मका अनुयायी ठान्दछन् । तामाङहरुमा तान्त्रिक प्रकृति पूजक बोन्बोको पनि अझै समाजमा केही स्थान छ । तामाङ बोन्बोहरुका बारेमा थुप्रै अन्वेषकहरुले अध्ययन गरेर पुस्तकाहरु पनि प्रकाशन गरेका छन् । तामाङहरु आफ्नो सम्पूर्ण कृयाकर्म बौद्ध परम्परा अनुसार नै लामाद्वारा गराउँदछन् । बोन्बो तामाङहरुले पनि आफ्नो घर परिवारमा जन्म तथा मृत्यु कर्ममा लामा पुजारीलाई चलाउने परम्परा भएकोले बोन्बोलाई तामाङ समाजमा छुट्टै धर्मको रुपमा लिईदैन । बौद्ध धर्मले राजकीय मान्यता पाएको लिच्छविकालको धर्म, कला संस्कृति र तामाङ कला, संस्कृतिको तुलनात्मक रुपमा हेर्दा नेपालको पुराना बौद्ध जातिनै तामाङहरु हुन भन्न गाह्रो पर्दैन । आठौं शताव्दीको शुरुतिर गुरु रिम्पोर्छेको तिब्बत आगमनपछि भने पुरै तामाङ समाजले बौद्ध धर्म अपनाए । मल्लहरुको उपत्यकामा उदयपछि तामाङहरुलाई सिनु खाने, गोरुको मासुखाने म्लेच्छ भनेर उपत्यकाबाट निकालियो र उपत्यका प्रवेशमा रोक लगाइयो र धार्मिक सहिष्णुताको नाममा तामाङ लगायत नेवार बौद्धहरुमा राज्यद्वारा हिन्दू धर्म लादियो । मल्लकालमा बौद्ध धर्म र संस्कृतिलाई बढी हिन्दु करण गरिएको थियो र यो क्रम गोर्खा राज्यको विस्तारपछि पनि कायम रह्यो । तामाङगाउँका ६ गोन्पाहरु पहिलो पटक रणबहदुर शाहको पालामा ब्रोटाङका




तामाङ बोन्बो

मिनडुक काग्यु

समुदायका देवादार्मा लामालाई दिए । फेरि जंगबहादुरले (सन १८४६-१८७७मा) आएर देवादार्मावाट पनि खोसेर हिन्दु मन्दिर मातहात राखे र गोन्पाका सम्पूर्ण भूमिहरु हिन्दू मठ-मन्दिरको गुठीमा परिणल गरि दिए ।

दोलखा चरीकोटको चरी गोन्पा दोलखा भिमसेनको गुठीमा, ह्वीस्याङ्गु गोन्पा तौथली गुठीमा, बाङथली र पोङदी गोन्पाका भूमिहरु सेनाका बस्नेत परिवार नागर्चे र दोङ्मा गोन्पाको भूमि कोटतिमाल पलान्चोक भगवतीको गुठी मातहात राखि दिए, तामाङ गोन्पा (ध्याङ्ग)का गुठीहरु सबै हिन्दू मठ-मन्दिरलाई दिए । वि.सं. १९१० मा ऐन नै ल्याएर राज्यमा पूर्णतया हिन्दू धर्ममा आधारित कानून बनाएकाले तामाङ संस्कार संस्कृतिहरुले राज्यवाट लगातार भेदभाव, हेला र तिरस्कारहरु वेहोर्नु परेको छ । यस प्रकार विगतदेखि आफ्नो संगठित राज्यसत्ता अनि बलियो धर्म संघ र तामाङ समाजमा बौद्ध धर्मका वारेमा ज्ञानी धर्मगुरुहरुको अभाव संगसंगै राज्यको दमन उत्पीडनले गर्दा तामाङ बौद्ध धर्मको पर्याप्त विकास हुन सकेको देखिदैन । तर पनि नेपालमा प्राचीन कालदेखि लगातार बौद्ध धर्मलाई आफ्नो जातीय पहिचान धर्मको रुपमा तामाङहरुले राज्यले जतिसुकै दमन गरे पनि आत्मसात गरी आएका छन । आज यो धर्मलाई नेपालको राष्ट्रिय पहिचान दिने धर्मको रुपमा राज्यले स्वीकार्न बाध्य भएको छ ।

([illegible] खुश्री ठीम देन मीन थान्बा ठीम।

(कु-पार-९)

## (༣) ད་ཨང་ རིམ་ཁྲིམ་ **संस्कृति**, :-

तामाङ संस्कृति नेपालको आदिवासी संस्कृतिहरु मध्ये एउटा उत्कृष्ट संस्कृति हो। नेपालको सांस्कृतिक विविधता भित्र तामाङ जातिको पहिचान र आफ्नो छुट्टै अस्तित्व बोकेर बाँचेको छ तामाङ संस्कृति। जन्मपूर्व गर्भधारण, जन्म, शुद्धि, नाम प्रतिष्ठा, टाप्चे, छेवर, स्यामा पीन्बा, विवाहका आदिका प्रकृयाहरु यो धरतीको प्रत्येक कृयासंग एउटा न एउटा आस्था परम्परा गाँसेको हुन्छ। जस्तो- विवाहमा छोरीलाई "च्योल्बा"(चारदाम)गर्दा माईतीले 'ह्रीङसल' च्योल्सी गरेको हुँदैन। जसलेगर्दा चेलीको थर गोत्र विवाह पश्चात पनि परिवर्तन हुँदैन र उसको थर उनीबाट जन्मने बच्चाले पनि पाउँदैन र बाबुकै थर गोत्रमा जान्छ।

नेपालमा तामाङ जातिको लोकभाका सेलो गीतको नामले प्रसिद्ध छ। अनि तामाङको लोकबाजा डम्फु, मुर्चुङ्गा, टङ्नाका धुनले हिमालय उपत्यका, पहाडका डाँडालाई रमणीय पारिरहेको छ। अझै डम्फू भनेपछि त चरी झैं फुरफुर हुन्छन तामाङहरु। *दोरा, म्हानेक्वाजी* को माध्यमबाट संसारको सृष्टि र समस्त मानव मात्रको मुक्तिको कामना गरिरहेको हुन्छ। मकै गोड्दा नाचिने, गाउने *लीङमा*

*क्वाअी,* हलो जोत्दाको *लाङ्बो ताप्पा, साअीकोले,. बारवर क्वाअी, गोम्बो ज्याबा, म्हेन्दो ज्याबा, नाम्सा ज्याबा, ग्याल्सा ज्याबा, गान्दी ज्याबा आदि क्वाअीहरु* को माध्यमबाट संसारको सृष्टि चक्रका बारेमा सचेत गराइरहेका हुन्छन् । अनि छेर्लु (विरह)का गीत, चोम्लु (दोहरी) ठट्टयौलीको गीतहरु वास्तबमै मौलिक तामाङ व्हाअी(गितहरु) हुन् । आज यी व्हाअीहरुको नाम समेत आजका तामाङ पुस्ताहरुले सुन्न पाएका छैन्न । आज यस्ता मौलिक गीत संगितहरु अवशेषबाट पनि हराएर भूगर्भमा विलुप्त भइ सकेका छन् ।

यी बाहेक आज तामाङहरुको *कीर्पा क्लाङ्बा(धनुष काँढ), रोल्दो क्लाङ्बा, छेइर्ये क्लाङ्बा, कादो क्लाङ्बा, जोमक्लाङ्बा, कोच्चाक्लाङ्बा* जास्ता तामाङ सांस्कृतिक खेलहरु लगभग मौखिक इतिहासबाट पनि हराइसकेका छन । हरेक सालको चैत्र पूर्णिमामा काठमाण्डौको बौद्ध, जामाचो(बलाजु) र स्वयम्भूमा तेमाल जात्रा मेला लागे जस्तो तामाङ गाउँहरुमा अनेत्र पनि विभिन्न पूर्णिमा तथा परेबा(एकादशी)हरुमा मेला लाग्ने गर्दछ । यस्ता मेलाहरुले पनि कुनै न कुनै इतिहास र पहिचान बोकि बसेको हुन्छ । तसर्थ यस्ता स्थानीय तामाङ चाड तथा मेलाहरुको पनि खोजी गर्नु पर्ने भएको छ । यी मध्ये हिन्दूचाड्ले विलुप्त पारिसकेको तामाङ चाड ल्होछार भने तामाङहरुले खोजी खोजी पुर्नजागृत गर्न सफल भएका छन् । ल्होछार जस्तै गरि तामाङ अन्य संस्कार संस्कृतिहरुको बारेमा पनि इतिहासको गहिराइसम्म पुगेर पुर्नजागरण ल्याउन सकेमा तामाङको मौलिक संस्कृतिहरुले अवस्य नयाँ जीवन पाउने छन् । जन्मदेखि मृत्यु संस्कारहरु जस्तै अन्य थुप्रै तामाङ संस्कारहरुको संरक्षण तथा अध्ययन, अनुसन्धान गर्नु पर्ने छ । जसले तामाङ जातिको चिनारी दिइ रहेको छ ।





(कु-पार-१०)

## ད་མང་ ཀེ་རུལ་ད་ བྲི་བ་ इतिहासको रचना :

रचना गरिएका इतिहासहरुले तामाङ जातिलाई यहीकाल खण्डमा, यही देश र प्रदेशबाट वर्तमान तामाङहरुको आदिम थलो रहेको भूभागहरुसम्म आएको किटानी गरेर कसैले भन्न सकेको वा प्रमाणीत गर्न सकेको छैन । तामाङहरु आफुलाई नेपालको भूमिपुत्र आदिवासी जाति भनेर गर्व गर्दछन् । यस्तो नेपालकै एक आदिम पुरानो जाति तामाङको इतिहासलाई नेपालका शासकहरुले उल्लेख गरेको तथा महत्व दिएको पाईंदैन । तामाङ जाति, तामाङ राज्य वा अधिराज्य र राजाहरुको बारेमा नेपालको प्राचीन, पूर्व लिच्छवि, उत्तर लिच्छवि, लिच्छवि काल, मध्य तथा आधुनिक नेपालको इतिहासमा उल्लेख गरेको छैन् । नेपालका शासक जातिहरुले तामाङहरुलाई राजनीतिक, आर्थिक, सामाजिक, सांस्कृतिक, धार्मिक, शैक्षिक, भाषिक आदिमा मात्र नभएर इतिहासको तहसनहस, शोषण दमन र उत्पीडन गरि आएका छन् जो वर्तमानसम्म निरन्तर चलिरहेकै छ । सत्ताधारी जातिका इतिहासकार तथा मानवशास्त्री, समाजशास्त्री, भाषाशास्त्रीहरुले लेखेको रचना तथा सामन्ती राज्यसत्ताका इतिहासमा तामाङ जातिलाई ठग्नु ठगेको छ । तामाङ जातिलाई मात्र होइन सिंगो मुलुकको आदिवासी/जनजाति तथा नेपाली जनताहरुको इतिहास लेख्ने काम भएन । राजनीतिक कुर्सीका मालिकहरुले हिन्दु अहंकारवादलाई बढाइ चढाइ गरेर कथित

इतिहास लेखेका छन् । त्यो सत्ताधारी र कुर्सीधारीहरुको इतिहासमा समेत गोर्खा राज्यको स्थापना र विस्तारकालमा पश्चिममा सेन तथा विष्ट राजालाई, गोर्खामा मगरका राजालाई, दोलखा र काठमाडौंमा नेवारका राजालाई, पूर्वमा राइ र लिम्बूका राजाहरुलाई हराएको इतिहास लेखेको छ । तर ती जातिहरुको भन्दा बढी जनसंख्या भएको, काठमाडौं उपत्यकाको तत्कालीन मल्ल राज्य याम्बु (काठमाण्डौ), हेराङ (पाटन) र खोपोङ(भक्तपुर) को वरिपरि कैयौं किपट र कविलाहरुमा रहेका भुरेटाकुर स्वतन्त्र तामाङ राज्य र राजाहरुका बारे एक शब्द पनि उल्लेख गरेको छैन । जबकि गोर्खा राज्यको उदय् हुनपूर्व नै 'अुओबा' रुम्बा, बल, ग्हीसीङ, आदि थरका तामाङ राजाहरु र राज्य अस्तित्वमा थिए ।

तामाङ राज्य र राजाहरुको बारेमा तामाङहरु मौखिक रुपमा अझै भनि रहेकाछन् यो-यो ठाउँमा फलानो राजा थियो । ती राजाका दरवारका अस्तित्वहरु र भग्नावशेषहरु विभिन्न तामाङ किपटहरुमा छरिएर रहेको भेटिन्छ । ताम्बा अर्थात मौखिक इतिहास परम्पराबाट पछिल्लोचरणमा तामाङ लिपिमा( लामा बौद्ध धर्म लिपिबद्ध तामयीग लिपिमा) भएका *दोङराप, फाराप, केराप* आदि वंशावलीहरु, उत्पत्तिका नाम्थरहरु, ह्राम, जीक्तेन तामछ्योओ, रुओछेन च्योप्पो,कुक्पा खा छ्योओ, तामाङ च्युनीला ठङ्सा थेन बब्सा आदि हस्त लिखित पुस्तकहरु पाइएको छ । तापनि तामाङ जातिको बारेमा लेखेको भन्दा कयौं गुणा बढी सूचनाहरु मौखिक परम्परामै संरक्षित रहेको पाइन्छ । यही परम्पराको माध्यमबाट तामाङहरुले एक पुस्ताबाट अर्को पुस्ता सार्दै आजसम्म जे-जस्तो अवस्थामा भएपनि तामाङको इतिहासलाई बचाएर ल्याएका छन् ।

मौजुदा मौखिक र भग्नावशेषहरुको अवशेषको रुपमा पाइएका प्रमाण तथा तथ्यहरुको वैज्ञानिक अनुसन्धान, अध्ययन, उत्खनन् विश्लेषण, लेखन जस्ताकार्यहरु आर्थिक एवं प्राविधिक रुपले पनि वर्तमान द्ररिद्रावस्थाका तामाङ समाजको क्षमता र वश:मा छैन् भने हिन्दू सामन्ती राज्यसत्तालाई त्यसको कुनै चासो र मतलव छैन । जसले गर्दा आज तामाङ जातिको सामाजिक इतिहासका हाम्रा महत्वपूर्ण भौतिक सम्पदा, निधिहरु तथा मौखिक सम्पदाहरु दिनानुदिन, आजभन्दा भोलि, भोलि भन्दा पर्सि हुँदै अवशेषहरुको पनि अवशेषको रुपमासँधै भग्नावशेषमै रहन बाध्य छन् । तापनि आज हाम्रो सामु विभिन्न देशका थुप्रै अन्वेषकहरु, समाजशास्त्री, भाषाशास्त्री, मानवशास्त्री, प्रागैतिहासिक पाषाण पुरातत्व विज्ञहरुले अध्ययन, अनुसन्धान उत्खनन् गरेर पत्ता लगाएका तथ्यहरु, शोधपत्रहरु विदेशीकै भाषामा भएपनि बग्रल्ति रहेका छन् । अब ती विदेशी भाषाहरुमा भएका तामाङ जातिका वारेमा लेखिएका, रचिएका

# दोस्रो अध्याय

## ཏ་མང་ ཀི་ཧྲལ་རི་ ཁ་པ་ཚིག་ལ་ རྫུར་ལོ་ ཐེན་ ངོ་སེ་པ་

## तामाङ जातिको इतिहाससंग सम्बन्धि केही शब्दहरूको अर्थ

अभिलेखहरु संगालेर या संग्रह गरेर आफ्नो भाषामा, पुनर्अध्ययन तथा विश्लेषण गरि भावी तामाङ सन्तानहरुलाई पुर्खाको इतिहास पूनर्लेखन गरि नयाँ इतिहासको सृजना गरेर भएपनि सन्तोष लिनुपर्ने छ। त्यो नयाँ इतिहास लेख्ने दायित्व आज तामाङ जातिको संघ तथा नव सन्ततिहरुको थाप्लोमा आइपरेको छ।



(कु-पार-११)



इस्तिहार

आगे नेपाल [illegible]
निजामती [illegible]
[illegible]
[illegible] तामाङ [illegible]
[illegible]
[illegible]
[illegible]
[illegible]
[illegible]
[illegible] तामाङ [illegible]
[illegible]

[illegible] तामाङ जातका सुबेदार बहादुरजङ्ग थीर तामाङ [illegible]
[illegible] आँदर गरेको कुरा सुनाउँदा [illegible]
[illegible] इस्तिहार जारी गर्दा [illegible]
[illegible] तामाङ जातले [illegible]
हुने गरी उर्दी निजामती सरकारी [illegible]
[illegible] तामाङ [illegible]
[illegible] लामा भोटे [illegible] तामाङ भनी लेख्ने [illegible]
संवत् १९२८ साल [illegible]

(बहादुर जंगथिर तामाङले हामी बाङ तामाङ हौ लामा भोटे होइन भनेर दाबी गरेर तामाङले सरकारी काम काज र अड्डा दफ्तरमा पनि तामाङनै भनेर लेख्न पाउनुपर्छ भनेर श्री महाराजमा लखेर निवेदन चढाएपछि तामाङले तामाङ लेख्न पाएको स्वीकृति पत्र इस्तिहार। यो इस्तिहारको प्रतिलिपि परशुराम तामाङको तामाङ जाति-२०५१ मा प्रकाशित भइसकेको छ। प्रतिलिपि लेखकसंग पनि सुक्षित छ।)

ཏ་མང་ ཀཨེ་རན་རི་ ཁ་པ་ ཚིག་ལ་ རྫོར་ལོ་

# तामाङ इतिहाससंग सम्बन्धित शब्द तथा अर्थ

यहाँ मुख्यतया तामाङहरुको इतिहासका मौखिक अवशेषहरुलाई आफूले सुने, देखेको, र स्वदेशी तथा विदेशी अन्वेषकहरुको विभिन्न पत्र-पत्रिकामा लेखादि तथा पुस्तकादिमा विभिन्न रुपमा प्राप्त सूचनाहरुको आधारमा तामाङ जातिको उत्पति, उद्गम् इतिहास र मौखिक रुपमा रहेको तामाङ अधिराज्य र राजाका इतिहासहरुलाई सममेटिएको छ।

नेपालका विभिन्नकालका तामाङ जातिहरुको सानातिना घटनाक्रमहरुलाई तथा रीमठीम, अर्थिक लगायत अन्यपक्षहरुलाई छाडेर यहाँ खासगरी उत्पतिबारे संक्षिप्तमा र तामाङ राजा र अधिराज्यको इतिहास मौखिक तथा उपलब्ध केही श्रोतका आधारमा प्रस्तुत गरिएको छ। त्यो भन्दा पहिले तामाङ राजा, राज्य अनि अधिराज्यको इतिहास खोज्न तथा बुझ्न जान्न आवश्यक ठानेका शब्दहरुको परिभाषा प्रस्तुत गरिएको छ।

१' तामाङ,
३' याम्बु (काठमाण्डौ/नेपाल)
२' जोङ,
४' ग्ले/ग्लेसा( ग्याल्बो/ग्याल्सा)
५' ग्रोङ/रोङ/तमु,
६' कानी र
७' मुर्मी /मुल्मी,

## १' ད་མང་ तमङ/तामाङ

नेपालको ६० भन्दा बढी आदिवासी /जनजातिहरु मध्ये एक महत्वपूर्ण आदिवासी जाति तामाङ हो । तामाङ भाषा बोल्नेहरुलाई नै तामाङ भनेर चिनिन्छ । नेपालमा डम्फू, टुङना, मुर्चुङ्गा र सेलो भन्नाले तामाङ जातिलाई बुझाउँछ । अनि यो जातिको चिनारीको रुपमा आफ्नै घर बुना सुतीको स्यामा(लुंगी जस्तो फरिया), ग्या, गा-बरको, ग्या-तोकरोक, उनी राडी, पाखी स्योल्दो, सुर्कांओ(लुकुनी), फेङ्का(अल्लोको घरबुना लुगा), अनि लोक्ताबाट हाते कागज बनाउने, जंगली निगालोबाट नाङ्लो, डोको, थुन्से, नाम्लो बुन्ने, थाङ्का(चित्रकला), मकुण्डो खोप्ने(मास्क), आदि मौलिक पेशाहरु रहेको छ । तामाङ शब्दको अर्थ, प्रयोग, ऐतिहासिकता र व्यापकता आदि बारे निम्न अनुसार पाईएको छ ।

### १.१' ད་མང་ ཚིག་ལ་ གི་རབས་ ཕྱིན་ ཚོད་པ

### तमङ/तामाङ शब्दको इतिहास र प्रयोग :-

तामाङ शब्द मुख्यतया नेपालको राजधानी वरिपरि घेरिएर घना बस्ती भएको नेपालमा प्रथम आबाद गर्ने मंगोल मूलको मानव जाति वा समुदायलाई बुझाउँन प्रयोग भइ आएको छ । तामाङहरुले आफ्नो समाज वा समुदाय माझ आफ्नो परिचय *तामाङ* भनेरै चिनाएको पाइन्छ । त्यसो त, *तामाङ* शब्दको प्रयोग कहिलेदेखि भएको रहेछ हेरौं ।

विदेशी विद्वान म्याक्डोल्डका अनुसार हालको मुस्ताङ जिल्लाको गुन्थाङ जो पुराङ राज्यको एक भाग थियो । त्यहाँका राजा बुम देंगोन जसले सन् १२५३ देखि १२८० सम्म राज्य गरेका थिए । उनको बंशावलीमा तल्लो मुस्ताङमा रहेका *से मोन शेरिब अधिराज्यका तामाङहरुलाई दबाउन मुक्तिनाथमा किल्ला बनाउन लगाएका* बृतान्त उल्लेखित छ ।[१] सो बृतान्तले *तामाङ* शब्दलाई जातिवाचक शब्दको रुपमा प्रयोग भएको तथ्य उजागर गरेका छन् । यस तथ्यले *तामाङ* भन्नुमा गर्व गर्ने तामाङहरुलाई साँच्चिकै गौरवान्वित बनाएको छ । यो नै नेपालमा भेटिएका तामाङ जातिलाई बुझाउँन किटेर तामाङ शब्दको प्रयोग भएको एकमात्र सबैभन्दा पुरानो अभिलेख हो । यो कुरालाई सन १०११, १०३९ सालपछिका एवं काठमाण्डौका अन्तिम मल्ल राजा जयप्रकाश मल्लसम्मका शिलालेख तथा अभिलेखहरुमा तामाङ भाषाको शब्द याम्बु(काठमाण्डौ/नेपाल बुझाउँने)लाई *'श्री याम्बु, श्री महानगर याम्बु भूमो, याम्बुक्रमाया'* आदि उल्लेख भएको पाइनुले पनि त्यो समयमा तामाङहरुको

१ तामाङ जाति- पृष्ठ ३१ हेर्नुहोस ।

अस्तित्व प्रबल र व्यापक रहेको पुष्टि हुन्छ[4] । मल्लहरुको अन्त र गोर्खा राज्यको सामन्तवादी विस्तारले स्वतन्त्र तामाङ राज्यहरु गोर्खा राज्यको मातहातमा पुगेपछि तामाङ जातिको इतिहास, भाषा, संस्कृतिको पक्षमा कुनै सकारात्मक उन्नति भएको पाइँदैन । बदलामा तामाङ जातिको श्रम तथा भूमिमाथिको आधिपत्य खोस्दै तत्कालीन राजाले तामाङ गाउँका उर्वरा जग्गा-जमीन आफ्नो भारदार, जागिरदारहरुलाई विर्ताका साथै तामाङ धर्मको विरुद्ध विभिन्न हिन्दू मन्दिरका गुठीहरुलाई वितरण गरिएको थियो ।[5] त्यत्तिले मात्र नपुगेर, राज्यले सरकारी दफ्तरखानाको लागि चाहिने कागज बनाउने *कागजी रकम,* सरकारी मज्दुरको रुपमा *हुलाकी रकम, खानी रकम,* बारुद बनाउने मज्दुरी, नुन बोक्ने मज्दुरी आदिको रुपमा तामाङहरुबाट थुप्रै श्रम शोषण[6] गरेको थियो । तामाङहरुसंग श्रम लिंदाको त्यो सरकारी पत्राचारको रुपमा रहेको सनद, सूचना, इस्तिहारहरुमा *तामाङ* जातिलाई हेय् भावनाले 'लामाभोटे, भोटे, घलेभोटे, लामा आदि' भनेर विदेशी(तिब्बतीको) व्यवहार गरेको कुरा गोर्खा राजाको सन् १८२४ देखि १९५० सम्मका[7] सरकारी लेखितमा पाइएको छ । यसरी यहाँका भूमिको मालिक आदिवासी तामाङ जातिलाई राज्यले नै विदेशीको संज्ञा दिएर अपहेलित र रुखो व्यवहार गरिएको प्रमाणित भएको छ, यदि तामाङ साँच्चैनै तिब्बतको भोटे जाति (तत्कालीन नेपालको विदेशी नागरिक या तिब्बती आप्रवासी/प्रवासी)नै भएको भए किन तामाङहरु *तामाङ भाषामा* तिब्बतीलाई बोद वा बोत भन्थ्यो र ? बरु गोर्खा उर्फ *खसनेपाली भाषामा* तामाङ भाषाको *तिब्बत र तिब्बती*लाई बुझाउने *बोत*(बोद) शब्दबाटनै *भोट* शब्दको निर्माण भएको हो । अर्थात भोट भन्ने शब्द तामाङ भाषाबाट गएको हो । तसर्थ तामाङहरु तिब्बती होईन भन्ने कुरा *तिब्बतीलाई तामाङ भाषामा बोत्पा भन्नुले नै देखाउँछ* । मल्लकालपछि पृथ्वीनारायणले शुरु गरेको अन्य धर्म संस्कृतिका अहिन्दूहरुलाई हिन्दू बनाउने कुटिल

4. गंगालाल श्रेष्ठ-*स्वनिगलल छाय् पिहां वनेमाल तामाङ त ?-* सन्ध्या टाइम्स, न्ही पौ,ने. स. १११७ तछलाथ्व-८, शुक्रबार । डा. जगदिचन्द्र रेग्मी- "काठमाडौं शहर एक अध्ययन" पृ १००-१०३(२०५१)

5. अनुसार तामाङ बौद्धहरुको आस्थाको केन्द्र पूर्वका ६ गोन्पा(ध्याङहरु)को आम्दानीहरु क्रमसः ह्रीस्याङ्गु, तौथली माइको गुठि, बाङथली र पोङदी सैनिक बस्नेत परिवारलाई, नागर्चे र दोङमा कोटतीमाल र पलान्चोक भगवति, तथा दोलखाको चरिघ्याङ दोलखा भिमशेन गुठीलाई दिएको थियो ।.......

6. श्रम शोषनको उदाहरणको रुपमा पश्चिम १ नम्बरका खिन्चेत दश खुवा भेगका तामाङहरुले आफ्नो खेतको आम्दानी कुतको रुपमा नुवाकोटको भैरवी मन्दीरको गुठीलाई बुझाउनु पर्थ्यो, शाहि आँप बगैंचा गोड्नु पर्थ्यो र अनि हाते कागज सरकारी दफ्तरखानालाई काजजी रकमको रुपमा बुझाउनु पर्थ्यो । तत्कालिन गोर्खा राज्यको तत्सम्बन्धि पत्राचार गरिएको सरकारी कागजातहरु( *-बोमताङडक-१९९४)*

7. BOMTANG doc.1,Jagat Bahadur Tamang -1994 मा पुरानो सरकारी सनद, सूचना, इस्तिहार आदिसंग्रह गरीएको हालको नुवाकोट जिल्लाको बुङताङमा भेटिएको । यसको प्रतिलिपिहरु लेखकसंग अझै सुरक्षित छ ।

चाल, कथित 'चार जात ३६ वर्णको साझा फूलबारी' भन्ने कलुषित जातीय राज्य नीति राणा शासनसगै मलिन भए पश्चात मात्र थोरै भएपनि निर्भिकताका साथ यहाँका तामाङहरुले आफू भोटे होइन(*बोद* होइन) तामाङ हो, भन्ने, गौरवभाव मुखरित गर्न पाएका छन् । तर तामाङहरुले भने पहिलेदेखिनै आफ्नो गाउँ, बस्तीहरुमा आफूलाई *तामाङ* कै रुपमा चिनाउँदै आफ्नो गाउँ, बस्ती, हिमश्रृंखला, डाँडाँ, खोला, खोल्सी, नदी नाला, बनपाखा, रुखपातहरुको नाम समेत तामाङ भाषामै भाषित गर्दै आएको थियो । यहाँका तामाङलाई सरकारले सरकारी कागजातमा लामाभोटे लेखिदिए पनि आफैले कहिल्यै *लामाभोटे* भन्दैन उनीहरु गर्वकासाथ आफूलाई तामाङ भन्न रुचाउँछन् र त्यो समयमा पनि हामी बाह्र तामाङ भन्नुमा नै गर्व गर्दछन् । त्यस्तै थकालीहरुले आफ्नो पहिचान थकाली लालचन, भट्टचन, सेरचन लेखाए पनि मार्फामा अझै पनि उनीहरु आफ्नो भाषामा भन्नुपर्दा "तमङ" मै गर्व गर्छन्, अनि गुरुङहरु आजभोलि गुरुङ भन्नुमा भन्दा बेसी तमु भन्न रुचाउँछन् । किन भने *तामाङ/तमङ/तमु* भनेको आत्मादेखिको भावनात्मक रुपमा गौरवपूर्ण मौलिक जातीय पहिचान हो ।

यस्तो आफ्नो सदियौँदेखिको वास्तविक प्रहिचान *तामाङ*लाई भोटे भनेर गरिने हेय् र अपमान सहन नसकेर नै राणाकालमा आएर तत्कालीन ब्रटिस सरकारका ठूला कमाण्डरको अङ्गरक्षक तथा सेवक *तामाङ सरदार* बहादुर जंङ्गबीरले आफूहरु पहिलेदेखिनै तामाङ भनेर चिनिने आसयको *"हामी बाह्र तामाङ"*हरु भन्ने दाबीका साथ बाह्र तामाङलाई लामाभोट नभनी आफ्नो थर लेख्दा तामाङनै लेख्न पाँउ भनि निवेदन लेखे उनको यो निवेदनको सुनुवाई स्वरुप सम्बत १९८९ भाद्र ६ का दिन तामाङलाइ *लामाभोटे नभनि* तामाङनै भनी बोलाउन र लेख्न स्विकृति पाए ।[8] यहाँ उनले राणा सरकारलाई चढाएको निवेदन बमोजिम, लेखिएको स्विकृति पत्रमा" हामी बाह्र तामाङलाई " भनी उनले दाबी गरेको स्पष्ट देखिन्छ ।

---

बहादुर जङ्गधिरको यो दावीले, शासकहरुले 'लामाभोटे' भनेर संबोधन गर्ने गरेता पनि आफू भित्र पहिलेदेखिनै 'तामाङ' भन्ने पहिचान रहेकोकुराको पुष्टि भएको छ। सायद बहादुर जङ्गविर तत्कालिन ब्रटिस सेनाको एडिसी नभएको भए उनको निवेदन उपर दमन हुन सक्थ्यो अथवा सरकारी प्रथामा चलेको चलनको विरुद्ध आवाज उठाउनेको शिर छेदन हुने थियो । यहि त्रासले यो भन्दा पहिले तामाङहरुले आफूलाई तामाङ भन्ने पाउँ भनि निवेदन दिन सकिरहेका थिएन ।

तसर्थ विभिन्न समयमा विभिन्न विद्वानहरुले तामाङ जातिलाई बुझाउँन थुप्रै शब्दहरुको प्रयोग गरेको भेटिन्छ। तामाङ शब्द बाहेक *मुर्मी, मुल्मी, भोटे, लामा भोटे, सें, अेशाङ, सेमोन, शेर्पा, शेर्पा लामा, काठभोटिया, भोटिया, बोन्पा, रोङपा, ल्होबा, कागते, कागते हयोल्मो, हयोल्मो, घले, घलेभोटे, जाड, जाडे* पनि प्रयोग गरिएको छ। समय काल परिस्थिति अनुसार जे सुकै रुपमा चिनिए, जानिए तापनि यो मानव समुदायलाई तामाङ जाति भनेर गर्व गर्ने उसलाई चिनाउने मौलिक तामाङ भाषा, लिपि, भेषभूषा, धर्म, संस्कृति, परम्परा, आफ्नो छुट्टै सीमा, उत्पत्ति इतिहास जस्ता मौलिक तामाङ निधिहरु रहेका छन् । तामाङ जाति बहुसंख्यक र व्यापक भएको कारण अझै अवशेषको रुपमा भएपनि उपरोक्त तामाङ जातिको चिनारीहरु बाँचि रहेका छन्। यीनै तामाङ जातिको महानतम् निधिहरुलाई गहन अध्ययन मनन तथा विश्लेषण गरी निकटबाट बुझ्ने प्रयास नै नगरि तामाङ जातिको करुणामयी चरित्र भन्दा बेगल अर्थहरु समेत आजभोलि तामाङ शब्दको बारेमा विभिन्न लेखकहरुले अर्थ्याउने र प्रयोग गर्ने गरेको पाइन्छ। यसरी गरिमामयी तामाङ पहिचानलाई खिसी र हेय्का तर्कहरुले भ्रमका झाँङ्गहरु फाँडेर यथार्थ तामाङ भावनामा आधारित तामाङ शब्दको अर्थ र प्रयोग बारेमा देहाय अनुसार बुंदागत चर्चा गरिएको छ ।

[४] इश्तिहार श्री ३ को छाप,दस्तखत .. *"आगे नेपाल [illegible] मलुकका जङ्गी निजामती अड्डा गौंडा गोश्वरा भै भारदार रैति दुनिया गैह्रकं यथोचित उप्रान्त बाह्र तामाङ जातलाइ लामाभोटे भन्ने चलन चलेकोमा अरु अरु अनेक किसिमका जात धरकाहरु पनी लामा भोटे भनी बोलाइने र लेखिने हुनाले कुन कै जातधरको हो केही छुट्टिने भएन. हामी बाह्र तामाङलाइ आफ्नो तामाङ जात भन्ने भनिने लेख्ने लेखाइने गराइ बक्सें हुंदो हो भनी सो तामाङ जातका सरदार बहादुरजङ्गबीर तामाङ अ.बी.इं.डी.यम.यम.सी. अगुवा भै जाहेर गरेको कुरा मुनासीबै देखिएको हुंदा यो कुरा मन्जुर गरीबक्सी यो इस्तिहार जारी गरी बक्सेको छ। अब उप्रान्त हाम्रा नेपाल सरहदगोरखाराज भरका तामाङ जातले आफ्नु जात लेख्दा लेखाउंदा तामाङ भनी लेख्ने लेखाउने गर्नु जङ्गी निजामती सरकारी अड्डाखाना पल्टनका कागजमा र दुनीआदारको व्यवहारमा पनि बाह्र तामाङ जातका भोटेको जात लेख्दा र सो जातको भोटेलाई बोलाउंदा लामा भोटे नभनी तामाङ भनी लेख्नेबोलाउने गर्नु इति सम्वत १९८९ भाद्र ६ गतेरोज १ शुभम्."* । यो ईस्तिहारको प्रतिलिपि लेखकसंग पनि सुरक्षित छ।"तामाङ जाति-२०५१" पुस्तकको पृष्ठ -२१५, परिशिष्ठ २.१ मा पनि छापिएको छ।

## ༡་༣་ ཏ་མང་ ཚིག་ ཕྱེན་ བོད་ ཚིག་ རྟ་དམག་

# तामाङ र तामाग तिब्बती शब्दको संरचना

तामाङ जातिलाई बुझाउँने तामाङ शब्द दुई भिन्दा भिन्दभिन्दै शब्दहरु ཏ་ = **TA**= ता र མང་ = **mang/maŋ** = माङ मिलेर ཏ་མང་ TAMANG/ tama/ तामाङ ' शब्द बनेको हुन्छ। यहां 'ङ' ध्वनी चिन्ह लाई लेख्न अंग्रेजीमा N र G अनि ŋ प्रयोग गरीएको छ। यही *NG* लेख्नेहरुले देवनागरी लिपिमा लेख्दा पनि *ग* लाई छुट्टै ध्वनी र हिज्जे ठानी *ग* झुन्डाएर ङ्ग लेख्ने गरेको पाइन्छ।

यसको प्रभावमा तमङ वा तामाङ लाई तामांग लेख्नु अशुद्धि हो। किनभने *ङ* ध्वनी लाई *ग* लेखेको छ। सिक्किम, दार्जीलीङतिर केहीले *तामाङ* मौलिकपन लाई *तामङ* पनि लेख्न थालेका छन् तर देवनागरी लिपिमा लेखिएको मङ शब्दको तामाङ भाषामा कुनै पनि प्रकारको अर्थ लाग्दैन। तसर्थ हिज्जेनुसार शुद्ध /तामाङ/ ཏ་མང་ नै लेख्नु उपयुक्त हो।

तिब्बती शब्द *तमग* लाई लेख्दा /र्‌तदमग རྟ་དམག་/ लेख्ने गर्दछन् यसको हिज्जे *तामाग* हुन्छ। यहाँ तिब्बतीभाषाको शब्दकोश अनुसार རྟ་ र्त को अर्थ घोडा हो र 'དམག 'दमग' को अर्थ सेना हो । यी दुई शब्द मिलेर बनेको शब्द རྟ་དམག་ 'तामग' शब्द बन्दछ। རྟ་དམག་ 'तामग' को अर्थ *घोडेसेना वा घोडा चढेर*

*युद्ध गर्ने सेना, रिसल्ला, अश्वारोही, वा घोडा चढी, घोडा व्यापारी या व्यवसायिक सेना* भन्ने बुझाउँछ । अनि यहि अर्थलाई बोकेर लेखकहरुले तामाङ जातिको उद्गम इतिहासको सम्बन्धमा सोङचाङ गाम्पो, नरेन्द्रदेवको समयमा नेपाल तिब्बत युद्धताका नेपाल आएका तिब्बती घोढाचढी सेना अर्थात *तामाग* जो, पछि यतै बसे भनिन्छ । ती तिब्बती तामागहरु *तामाङ* भएका हुन भन्ने अनुमान गर्ने गरेको छ तर तामाङ जातिको आचरण, संस्कार, संस्कृतिमा शेर्पा वा थाक्सेका (पहाडतिर जिम्बु बेच्न आउने तिब्बती मूलका मानिस) जस्तो तिब्बतीपना भेटिँदैन । तामाङहरुमा *घोडा चढी, घोडा व्यापारी या व्यवसायिक सेना* को चरित्र पनि छैन ।

यहाँ तामागले मानव जाति र कुनै राज्यको मानव समुदाय भन्नेपनि बुझाउँदैन । *तामाग* शब्दले मात्र राज्यको संयन्त्र वा प्राविधिक अंग बुझाउँछ । त्यसकारण *तामागबाट तामाङ* भयो भन्ने अर्थमा यथार्थता भेटिँदैन । किन भने तामाङहरुले तिब्बतीहरुलाई *बोद, बोत* वा *बोतपा* भन्ने गर्दछन् भने कसरी तामाङहरु तिब्बती घोडा चढी रिसल्ला हुनु ? के चाँहि हुन सक्छ भने जसरी नेवार समुदाय भित्र भारतीय हिन्दू बाहुन, क्षेत्रीहरु, ठकुरी, अहिन्दू एवं आदिवासी ज्यापू जाति लगायतको विभिन्न जातजातिकाहरु कालन्तरमा सबै एउटै भाषा र संस्कृतिमा बाँधिएर नेवार भए त्यसरी नै तिब्बतबाट आएका तिब्बतीहरुले तामाङ धर्म संस्कृति र भाषा अंगालेर तामाङहरुसंग मिसिएपछि तामाङ बनेको हुन सक्ने तथ्यलाई नकार्न सकिँदैन । उदाहरणको निम्त तिब्बतबाट सबैभन्दा पछिल्लो समयमा नेपाल आएका ह्योल्मो ( हेलम्बु)का ह्योल्मो तथा शेर्पा, कागतेहरु जसले तामाङ ह्रुई अर्थात गोत्रहरु अपनाएका छन् । ती मध्ये हाल नेपालका प्राय कागतेहरु पुरै रुपमा तामाङमा विलीन भइसकेका छन् भने दार्जीलीङका कागतेहरुले भारतमा अझै छुट्टै जातिको रुपमा सरकारबाट जनजातिको सुविधा पाइरहेका छन् ।

तसर्थ तामाङहरु तामागबाट तामाङ भएको अनुमान हचुवाको भरमा गरिएको आंकलन हो । तामाङहरु(नेपालका मंगोलहरु) तिब्बती मार्ग भएर वर्तमान भूभागमा भारतीय हिन्दु आर्यहरुको आगमन हुनु भन्दा धेरै पहिले प्रथम पटक पाईला टेक्ने जातिको रुपमा सबै मानवशास्त्री-तथा इतिहासकारहरुले स्वीकारेका छन् ।



२.३. བོད་སྐད་རི་ ཏ་མང་ ཚིག་ལ་ རྫོར་ལོ་

# तिब्बती भाषामा तामाङ शब्दको अर्थ

विशुद्ध "ཏ་མང तामाङ" शब्दको अर्थलाई एउटै शब्द तमगसंग मात्र अर्थ्याएर त्यो भन्दा गहिराइमा पुने प्रयास नै नगरी एकतर्फी रुपमा एकपछि अर्कोले एउटैको श्रोतलाई सर्वत्र पारिएको छ। तर खोजी गरेमा त्यस्ता थुप्रै शब्दहरु तामाङ, चिनीया तथा तिब्बती भाषामा पाईन्छ। त्यसैले तामाङ जातिको उद्‌गम तथा उत्पति संग पनि तामाङ शब्दको अर्थले सरोकार राख्ने कुरा भेटिन्छ। तिब्बती भाषाको शब्द निर्माण प्रकृया र तिब्बती शब्दकोशमा खोजी गरि विश्लेषणगर्दा तामाङ जातिको इतिहास र उत्पतिसंग मेल खाने अर्थ पनि भेटिएको छ। तामाङ शब्दको ता को सग्लो तिब्बती रुप 'ཏ་ = TA= त' हो, जसको उच्चरण 'ता 'हुन्छ। तिब्बती शब्दकोशमा दिएको सग्लो 'ཏ་ = TA= त' शब्दको अर्थ ཏ་ཞེས་པ་ནི་ཆོས་ཐམས་ཅད་ཀྱི་སྒོ་སྟེ་ /tashes-pachos thams-cad-kyisgo-ste/ The letter called ཏ is a door of admission to all things.( Bum. प 283) दिईएको छ। यहाँ यो 'ता' शब्दले सम्पूर्ण बस्तुहरुको प्रवेशद्वार, क्षेत्र वा

आवागमन हुने स्थान, सिमाना, नाका आदि अर्थहरु बुझाउंछ । यो अर्थले धेरै अन्वेषकहरुले तामाङ जाति र तामाङ भाषालाई बुझाउन वर्षौं पहीलेदेखिनै प्रयोग गरिएको शब्द मुर्मीको अर्थसंग नजिक्याएको छ। जो अर्थ मुताबिक तामाङ जातिको ऐतिहासिक तथा भौगोलिक वस्तुस्थितिसंग पनि मेल खान्छ ।

त्यसैगरी तामाङ शब्दको पछिल्लो शब्द *माङ* को तिब्बती रुप མང་,

མངས་ र དམངས་ = **mang/maŋ /maŋss /dmaŋs** = मङ/मङ्स/दमङस हो, जसको एउटै हिज्जे वा उच्चारण 'माङ' हुन्छ। यी तिब्बती

शब्दहरु མང་, མངས་ र དམངས་ आदि एउटै हिज्जेका अलग अलग अर्थ

बुझाउने शब्दहरु हुन्। तिब्बती भाषा र शब्दकोश अनुसार མང་ वा མངས་ र

དམངས་= मङ/मङ्स/दमङस अर्थात *माङ* ले क्रमस: (great quantity, many/ public or common people) ठूलो परिमाण, अत्याधिक-धेरै र सर्वसाधारण जनसमुदाय भन्ने बुझाउंछ ।

.उपरोक्त दुइ शब्द 'ता' र 'माङ' मिलेर बन्ने 'ད་མང तामाङ' शब्दले प्रवेश क्षेत्र, नाका वा द्वार वा राज्यको सीमा क्षेत्रमा बसोबास गर्ने, अत्याधिक धेरै जनसंख्या भएको जाति अथवा सर्वसाधारण जनसमुदाय भन्ने बुझाउंछ। यथार्थमा तामाङ जातिको बसोबास नेपाल तथा तिब्बतको सिमा क्षेत्रको हिमालय पहाड तथा मल्लकालदेखि काठमाण्डौंको मल्ल, मकवानपुरका शेन आदि पृथ्वीनारायण शाहले गोर्खा राज्यको विस्तार गर्नु पहिलेको, शक्तिशाली राज्यहरुको सिमाना र विशेष काठमाण्डौ उपत्यकाको चारैतिर वरिपरिका डाँडाहरुमा घना आवादी रहेकाले पनि तामाङहरुलाई प्रवेशद्वारको वा नाकाको जातिको रुपमा लिंदा अन्यथा नहोला । त्यसैले अन्वेषकहरुले तामाङ जातिलाई बुझाउन एकताका प्रयोग गरिआएको शब्द *मुर्मी* जसको अर्थ सिमाना, प्रवेश क्षेत्र वा प्रथम उत्पति, आदिम जाति वा भूमिपुत्र, आदिवासी जातिको रुपमा चित्रण तथा व्याख्या विश्लेषण गरेको पाइएको छ। त्यसैले तिब्बती भाषाको 'ता' र 'माङ' दुई शब्दबाट बन्ने तामाङ शब्दको अर्थ तिब्बती क्षेत्र भन्दा बाहिरको बहुसंख्यक मानव समुदाय भन्ने नै बुझाउंछ । यसलाई नेपालको जनगणना-२०११ को तथ्यांकले पनि स्पष्ट पार्दछ। तामाङको जनसंख्या प्रतिशतको आधारमा सबै भन्दा धेरै छ (हेर्नुहोस् तालिका-१) ।

## ༡.༨ ཀུ་མི་ སྐོད་རི་ ཏ་མང་ ཚིག་ལ་ ཇོར་ལོ་

# चिनीया भाषामा *तामाङ* को अर्थ

तिब्बती भाषामा मात्र होइन तामाङ शब्दसंग मिल्दोजुल्दो शब्द चिनियाँ भाषामा पनि पाईन्छ । तामाङ भाषा चिनियाँ भाषा जस्तै तानयुक्त भाषा हो तर तिब्बती भाषामा तान पाईदैन ।

तसर्थ तामाङ जातिलाई बुझाउँने तामाङ शब्दको *ता* र *माङ* शब्दलाई चिनियाँ भाषाको ता र माङ शब्दसंग दाँजेर हेर्न सकिन्छ । यसरी हेर्दा ती शब्दहरुले दिने अर्थ *तामाङ जाति*को कला, संस्कृति, प्रकृति व्यवहारसित अत्यन्त निकट र सान्दर्भिक पाइन्छ । यसको लागि *तामाङ* शब्दको रुपसंग मिल्ने चिनियाँ शब्द *ता-मीङ* ཏཱ་མིང་ लाई लिन सकिन्छ । चिनियाँ भाषामा *ता-मीङ* ཏཱ་མིང་ को अर्थ /ta-miŋ/ the great ming dynasty अर्थात चीनको *महान मीङ राजवंश* हो, जसले लामा मतका बौद्ध धर्मका गुरु चोङखापालाई चीनमा आमन्त्रण गरी लामा बौद्ध धर्मको प्रबर्द्धन गराएका थिए ।

यो ता र मीङ/ ཏཱ་ མིང་ (महान राजवंशलाई बुझाउने) चिनियाँ

शब्दसंग *तामाङ* भाषाको 'ता/ ཏ་ र མང་ /माङ' तुलना सकिन्छ। चिनिया भाषामा

ཏ་ ता को अर्थ *महान* ( **GREAT** ) र *मीङ* མིང་ को अर्थ

**/n./ of a family** हो।[9] यहाँ चिनिया भाषा अनुसार 'ता माङ' भन्नाले महान परिवार या महावंश वा महान मानव समुदाय भन्ने बुझाउँछ।

यहाँ 'ता' ཏྭ वा ཏ་ को अर्थ **Great =** *महान* भन्ने बुझाउँछ, 'ता' शब्दले

घोडाको अर्थ दिँदैन। 'ता' ཏྭ को अर्थ *महान करुणा* भएको महावंशलाई बुझाउँछ।[10] चिनिया भाषामा तानयुक्त चार प्रकारका माङहरु मध्ये एउटा अर्थ *माङ* धेरै बुझाउँछ। हुन पनि तामाङ जातिको संख्या नेपालमा अन्य आदिवासीको भन्दा धेरै छ। चिनियाँ भाषा 'ता' ले महान बुझाए जस्तै तामाङ समाजमा वर्णाश्रम वर्णभेद व्यवस्था या आफू-आफूमा ठूलो सानो भन्ने भेदभाव छैन, तामाङहरु सिधासादा चरित्र, सोझो प्रकृतिका नै हुन्छन। यसले तामाङ जाति र संस्कार संस्कृतिलाई महान, करुणामय बुझाउँछ। त्यसकारण *तामीङ* (महानवंश)बाट *महान मानव जाति* बुझाउँने *तामाङ* शब्द बन्न सक्ने बलियो सम्भावनालाई नकार्न कठिन हुनेछ। अर्थात *तामीङबाट तामाङ* भएको अनुमान लागाउँन पनि अन्यथा हुने छैन। जसको बारेमा अझ गहन अध्ययन गर्नु पर्ने ढोका *तामीङ* शब्दले खोलेको छ। खिसी गरेर तिब्बतको घोडा चढी रिशल्ला तामगबाट तामाङ भयो भन्नु भन्दा *तामीङबाट* सोझै *तामाङ* हुनसक्ने देखिन्छ। इतिहासमा र तामाङ वंशावलीमा भएकै कुरा हो, *ग्यानाक ग्याल्सा* (महाचीन देश) अनि ग्यानाकमा भएको तामीङ। उनीहरुको रुपरंङ्ग लवाइ-खुवाइ नाटीकुटी मिल्छ र उनीहरुको धर्म पनि तामाङ जस्तै लामा बौद्ध मतकानै हुन। तसर्थ तामाङ शब्दको चिनियाँ भाषाले

दिएको अर्थले हिमालय जडान प्रदेशको महान मानवजाति बुझाउँछ।

---

**9.** /ta-miŋ / the great ming dynasty over thrown in 1634 AD. त्यस्तै अर्को मिल्दो प्रसंग ཏྭ་

མིང་གཡུང་ལོ་རྒྱལ་པོ (-/ta-miŋ-gYuŋ-lo rGyal-po/ Emperor yunglo of the Ming Dynasty who greatly encourageed lamaism and sent invitation to Tsongkhapa to visit China. *Sarat Chandr Das, page 511-13* यो शब्दकोश अनुसार རྟ་དམག་ भनेको रिसल्ला वा घोडाचढी सेना, / རྐང་དམག་ भनेको खुट्टाले हिड्ने पैदल सेना भन्ने अर्थ दिएको छ।

**10.** यहाँ तिब्बती भाषाको ཏ་ता वर्णमा तल पुच्छर सानो ཝ་-रि झुण्डाइनुको अर्थ तिब्बती भाषाको व्याकरण अनुसार आगन्तुक शब्दलाई लेख्दा लेख्ने परम्परानुसार लेखिएको हो।

१.५ བོད་ཀྱལ་པོ་ ཕྲེན་ ཏ་མང་ རྒྱུང་རུས་

## तिब्बती राजा र तामाङ वंशावली

तामाङ जातिको बाह्र तामाङ र अठार तामाङको छुट्टाछुट्टै तथा तामाङ जातिमा संसारको उत्पति बारे पनि अलग्गै वंशावलीहरु (जसको नाम माथि नै उल्लेख भइसकेको छ) तामाङ लिपि (लामा लिपिमा) लेखिएको पाइन्छ। यी लिखित तथा अलिखित ताम्बाको वर्णनमा तामाङ जातिलाई जोडेर तिब्बत र तिब्बती र राजाहरुको उल्लेख गरिएको पाईंदैन।

यीनै तामाङ जातिको वंशावलीहरुमा ल्हासा, खाम क्षेत्रको बाहेक सिंगो तिब्बत राज्य र धर्मराज सोङचेन गाम्पोको बारेमा केहि वर्णन वा उल्लेख गरिएको पाईदैन। तामाङहरु साँच्चै नै सोङचेन गाम्पोका *घोडाचढी सैन्य तामग* भएको भए जसरी विभिन्न तामाङ थरहरुको आ-आफ्नै राजकूल उल्लेखगर्दा सोङचेन गाम्पो र बाव्सा वा आगमन उत्पत्ति स्थल तिब्बतको बारेमा बताएको हुनुपर्ने हो तर छैन्।

उदाहरणको लागि "मुगु ग्याल्साला मोक्तान बब, याही ग्याल्पो, छीप्चन ग्याल्मो तेन" भनेर आफ्नो राजवंश को उल्लेख गरे झैं तिब्बत र सोङचन गाम्पोको बारे केही न केही त उल्लेख गरिएको हुनु पर्थ्यो तर छैन। तामाङ वंशावलीहरुमा सोङचेन गाम्पो र उनको राज्यप्रति तामाङहरुले अनभिज्ञता जनाउँछन् र तामाङ जाति नेपालको आदिवासी हो भन्ने कुरालाई तामाङ जातिको देवनागरी लिपिमा अनुदित तथा मुद्रीत दोश्रो पुरानो पुस्तक 'ताम्बाकाअीतेन व्हाअी रीठीम' मा सन्तविर पाखीनले पनि उल्लेख गरिसकेका छन्।[11]

त्यसैगरी विदेशी विद्वान Alexander Macdonald ले पनि तामाङ शब्दले आदिवासी नै झल्काउँछ भनेका छन। उहाले यदि यिनीहरु तिब्बतबाट आएको भएदेखि सोङचेन गाम्पोकोबारेमा आफ्नो वंशावलीमा केही उल्लेख हुनु पर्थ्यो तर छैन, तसर्थ तामग बाट तामाङ बनेको होइन भन्ने आफ्नो विचार राख्नु भएको छ[12]

༼ཀ༽ བོད་སེ་ ཏ་མང་ད་ རོང་པ་ པང་པ་

# तामाङलाई तिब्बतीले रोङपा (विदेशी) भन्छन्

तिब्वतीहरुले तामाङहरुलाई *रोङपा* भनेर भन्ने गर्दछ । आजभोलि पनि काठमाडौंमा भएका तिब्वतीहरुले समेत अझै तामाङलाई अलि हेयको भावमा *रोङपा* भन्ने गर्दछ । तिब्वती भाषामा नेपाललाई बाल ह्युल भन्दछन् भने इतिहासमा *नेपाल, सिक्किम भूटान* यी देशहरुलाई रोङ युल (रोङदेश) भन्दछन् । तामाङ जाति तिब्वतको (भोटको) बासिन्दा होइन भन्ने कुरा तिब्वतीहरुको उपरोक्त नेपाल पट्टिको भूभागलाई बुझाउन प्रयोग गरिएको बाल ह्युल, रोङपा र रोङ ह्युल तिब्वती शब्द अर्थलेनै बताउँछ ।[13] यसले पनि तामाङ जातिको मुख्य उदगम् स्थल तिब्वत वा तिब्वती राजा सोङचेन गाम्पोको घोडाचढी सेना(तामग) होईन भन्ने आधार मिलेको छ । तामाङ लेखक दार्जीलीङका डि.टी.जिम्वाले पनि यस्तै विचार आफ्नो पुस्तक 'तामाङको इतिहास अनि ताम्ब.को चाङबाङ'मा लेखेका छन् ।[14]

---

[11] सत्तवीर पाखीनले-'ताम्वा काइतेन व्हाइ रीमठीम'-तेश्रो संस्करण-१९८३, सिलगुढी, दार्जिलीङ को प्रस्तावनाको पृष्ठ १९मा लेख्नु भएको छ "... भोटेभाषामा पैदल हिंडने पल्टन(फौज) लाई (रुकङ-मग) र रिसल्ला (घोडा सवार) पल्टनलाई तमग भन्दछन् । नेपाल र हिन्दूस्तानसंग लडाई गर्न सोङचेन गाम्पोका साथ आएका तमगहरु भोटमा नफर्की धेरैजसो नेपाल र हिन्दूस्तानमै बसे भन्ने भोटको इतिहासमा लेखेको छ । नेपालका तामाङहरु तमग अप्रभंश भएर तामाङ भएको हो भन्ने कुरा भोटका विद्वानहरुको धारणा पनि छ । तर तमगहरु तामाङ भएको होइन, तामाङ नेपाल देशकै आदिवासी हुन भन्ने मेरो अनुमान छ । तामाङहरु भोटका आदिवासी सोङचन गाम्पोसंग आएको भए तामाङको पुर्ख्यौली(मुन्दुम)मा भोटको केही न केही उल्लेख हुने थियो । आफूसंग आएका राजा सोङचेन गाम्पोको पनि अवश्य उल्लेख हुने थियो तर यी कुनै कुराको उल्लेख गरेको छैन । सोङचन गाम्पोको तामाङहरुले नाम मात्र पनि सुनेको छैन । नेपाली राइ, बंगाली राय राई अप्रभंश भएर रोय भयो भन्ने तुक्का मिलाए जस्तै तमग अप्रभंश भएर तामाङ भयो भन्नु तुक्का मात्र हो ।..."

[12] "... the wor d ***Tamak***, meaning the Tamang, Tamang of Nepal, passed into the common usage, it became the Tamang, however, **in my opinion the *Tamak* did not become Tamang**. I think that these letter are Indigenous inhabitants(Adhibasi) of Nepal. If the Tamang originated from Tibet and if they came with SronTsen Gampo(to Nepal) there should be some mention of this in Tamang genealogies.". *Alexander Macdonald, Eassy on the Ethonology of Nepal and South Asia-1975, Ratnapustak Bhandar Kathamndu*

[13] तामाङ जाति-परशुराम तामाङ पृष्ठ-३०",..तिब्वतीहरु तामाङलाई रोङवा पनि भन्ने गर्दछ । रोङवाको अर्थ हुन्छ तिब्वतदेखि दक्षिणतिरका उपत्यकाहरुमा बसोवास गर्ने मानिसहरु यसले तामाङहरु तिब्वतदेखि बाहिरका मानिस हुन भन्ने जनाउँछ ।"

[14] त्यस्तै *जि.डि. जिम्बाले* 'तामाङको इतिहास अनि ताम्बाको चाङबाङ' *सन-२००२, पृष्ठ ४५मा, लेख्नुभएको छ (शिर्षक) ६.२ भोटे र रोङ्वा)।* "तामाङ जातिलाई (गुरुङ, मगर थकाली, योल्माली तथा शेर्पा जाति बाहेक) अन्य नेपाली जातिहरुले आज भन्दा तिस, चालिस वर्ष भन्दा अघि (बुझेर हो वा नबुझि) भोटे भन्ने गर्थे । आजकल त्यो शब्द विरलै सुनिन्छ । तिब्वतीहरुले तामाङलाई 'भोटे' कदापि भन्दैन उनीहरु आज तामाङलाई 'रोङवा भन्दछन् । जसको असली अर्थ उनीहरु नै जानून् । रोङवा र भोटे' शब्दमा जुन उपहास गुन्जन्छ सायदै यी दुइमा मानिक भिन्नता होला ।"

༼ཁ༽ ཏ་མང་ ཚིག་ བོད་ ཚིག་ ཏ་དམག་ཀྱམ་ ཏ་བབ་ཡ་ ཨ་ཧིན་

## तामागबाट तामाङ शब्द बनेको होइन

माथि नै चर्चा भइसकेको ཏ་དམག་'तामग' शब्दको मग बाट माङ हुने कुनै आधार देखिंदैन। मगबाट माङ नबनिकन शब्द निर्माण प्रक्रिया अनुसार तामगबाट तामाङ हुने सम्भावना छैन। किन भने अप्रभंश वा समास भएर बन्ने शब्दहरुको एक अर्कोमा सम्बन्ध रहेको हुन्छ। तामाङ र तिब्बती भाषामा ग ध्वनीबाट ङ ध्वनीमा परि वर्तन भएको अन्य रुपहरु पाईदैन। बरु ग ध्वनी क वा ख ध्वनीमा रुप बदलेको पाइन्छ। जस्तै:- नाकी = नाखी = नागी, प्रचलनमा पाईन्छ। त्यस्तै 'ङ' ध्वनी 'नं भएको पाइन्छ जस्तै:- ङ्यान्वा को न्यान्वा, ङासको नास तर ग बाट ङ भएको पाईदैन त्यसैले *तमग*बाट तामाङ बन्न कठिन छ।

༼ག༽ ཏ་མང་ ཞིན་ བོད་ རིམ་ཁྲིམ་ ཨ་ཏིག་

## तामाङ र तिब्बती संस्कृतिमा भिन्नता

तामाङ र तिब्बती भाषा एउटै पारिवार भित्र पर्ने भाषा भएकोले पारिवारिक सामीप्यता, लिपि बाहेक अन्य कुरा भाषाको व्याकरणीय संरचना र चरित्रमा भिन्नता छ। बाँकि मौलिक वेशभुषा, संस्कार संस्कृति (चारदाम, थुन्दा सोर्सी जस्ता रीमठीमहरु)संग कुनै पनि छेउ मिल्दैन। उदाहरणको लागि तामाङहरुको महान चाड ल्होछार र तिब्बती ल्होछार, बुद्ध जयन्ती पर्वको तिथि मितिमा भिन्नता छ। तिब्बतीहरुको ज्योतिष परम्पराको अध्ययन गर्ने हो भने उनीहरुमा प्रचलित ल्होछार परम्परा पाँचौ दलाइ लामाको उदयपछि मात्र राज्यस्तरबाट मनाउन् आरम्भ भएको हो, तर तामाङहरुले मानी आएको परम्परा झण्डै ५००० हजार वर्ष पहिलेदेखिको हो। त्यसकारण तामाङ ल्होछार तथा बुद्ध जयन्ती तिब्बती भन्दा भिन्दै तिथि र मितिमा हुन्छ। तामाङ जातिमा भएको ताम्बा प्रथा, तामाङले घरैमा बुन्ने उनको घरबुना लुगाहरु सुरकाअी, घलेक (ग्या/ गातो) लगाउने प्रथा जो पूर्वका भूटानदेखि नेपालको पश्चिम हुम्ला, कर्णालीसम्म पाईन्छ तर तिब्बतीहरुमा पाँईदैन त्यसैले तामाङहरु सोङचेन गाम्पोको सेना या रैती भएको तथा तिब्बतीहरु नै हुन् भन्ने त्यस्तो कुनै गन्ध तामाङ समाजको संस्कार, संस्कृति र परम्परामा पाईदैन। तसर्थ तिब्बती घोडाचढीं सैन्य तामागबाट *तामाङ* भएको होइन भन्ने बुझ्न तिब्बती संस्कृति र तामाङ संस्कृतिलाई नजिकबाट चिन्नेको लागि त्यती गाह्रो पर्दैन।

## ༼ང་༽ མང་གར་ ཏིག་ད་ བོད་ ཏ་དམག་ ཨ་ད་

# मगरलाई तिब्बती घोडाचढी सेना भनिदैन

रिसल्ला वा घोडाचढी सेना कै कुरा गर्ने हो भन मगर जातिलाई पनि तिब्बती भन्नु पर्ने देखिन्छ तर भनिएको पाईदैन । तिब्बतीहरु हामीले केरोङ भनेर चिनिने देशलाई *माङयुल* भन्दछन् । त्यस माङह्युल अर्थात *केरोङ*मा एउटा सैनिक किल्ला छ । जसलाई तिब्बतीहरु "मंगर" མང་སྒར་/mang sgar/a military fort in mang Yul भन्दछन् ।[o] यस अर्थमा नेपालको मगर जातिको ऐतिहासिक र व्यवसायिक पेशा पनि सेना पनि हो । किन भने नेपालमा गोरखनाथ पल्टन मगर जातिको बाहुल्यता भएको छुट्टै बटालिन नै छ, त्यस्तै ब्रिटिस र भारतीय गोर्खा पल्टनमा पनि । तर मगर जातिको उत्पतिमा तिनीहरुलाई सोङचेन गाम्पोको शैन्य वा तामग वा तिब्बती सेना भनिँएको सुनिदैन ।

मगरको तुलनामा तामाङलाई सेनामा भर्ति नै लिदैनथ्यो त्यसैले सोङचेन गाम्पोको युद्धमा आएका सैन्य *तमग*हरुनै तामाङ भए भन्ने आधार गलत हो । किन भने बहुसंख्यामा रहेको तामाङलाई तत्कालीन शक्तिशाली तिब्बत र चीनको मदत पाएमा सिगों नेपाललाई अधिनमा पार्न सक्ने देखी चतुर मल्लराजा र पछिका गोर्खालीहरुले पनि तामाङ समुदाय र तिनको भाषा संस्कृतिलाई चरम दमन, उपेक्षा, घृणा गरेका थिए ।

गाइको मासु खाने संस्कृति भएको तामाङ जातिलाई गाईको मासु खान नपाउने र उपत्यकामा आउन नपाउने प्रतिबन्ध लगाइएको थिया (यो कुरालाई विदेशी लेखक म्याकडोनाल्डले पनि उल्लेख गरेका छन्) । यो तथ्यले नै स्पष्ट हुन्छ कि तामाङहरुलाई गोर्खा राज्यको विस्तारपछि लामाभोटे भन्ने घृणा र हेयको संज्ञा तामाङको चिनारी स्वरुप दिइयो ।



[o] A Tibetan English Dictionary by Sarat Chandra Das Page.No: 958, Delhi1-996

ཀྱལ་པོ་ལང་དར་མ་ད་སད་པ་ལ་མ་ཀད་ ད་མང་ ཨ་དེན་

## लाङदार्माका हत्यागरी आएका भिक्षुहरु भन्ने सम्बन्धमा

तिब्बतका राजा लाङदार्मालाई मारेर भागि आउने लामा(भिक्षु)हरु तामाङ भएको भन्ने भनाई तिब्बती इतिहासमा पाईदैन । किन भने लाङदार्मा तिब्बतको तेश्रो महान धार्मिक राजा त्रिराल्पाचानका (TRIRALPACHEN-806-841 A.D.)का माहिला दाजु हुन । उनीहरुको ५ दाजुभाई मध्ये दुईजना बाल्यकालमै मृत्यु भएको थिए । जेठो लामा गेलोङ भएकाले । जब सन् ८१५ मा उनका पिता साअेनालेगको मृत्यु भयो । लाङदार्मा अधर्मि नास्तीक भएकै कारण उनले पाउने भएको राजहसिंहासनमा, चालाख मन्त्रीहरुले उनको भाई त्रि-राल्पचनलाई बसाए । त्रिराल्पचनको मृत्यु भएपछि भने लाङदार्मा ६ वर्षसम्म तिब्बतका राजा भएका थिए । उनको दुईवटी रानी थिए र दुवैको एक-एक जना 'ग्यल्बु' (राजपुत्र) थिए । लाङदार्माको मृत्यु पश्चात रानीहरुको झगडाले मन्त्रीहरु दुई खेमामा विभाजन भए । तिब्बत राजकुमारहरुको दुई अलग अलग राज्यमा विभाजन भयो । त्यसपछि त तिब्बत अरु पनि टुक्रामा विभाजन भएको थियो ।

त्यस बेलादेखि पाँचौं दलाइ लामा(सन-१६४२) राजा नहुँदासम्म तिब्बतमा धर्मानुशासन रहेन तथा राजनैतिक अस्थिरता रहेको थियो । तिब्बती इतिहासमा लाङदार्माको अत्याचारबाट विस्थापित भएका वा उनको हत्यारा भागेर नेपाल पसेको कुरा भेटिएको छैन, तसर्थ त्यो कुरो गलत हो (हेर्नुहोस A Brief History of Tibet-1997) । तर लाङदार्मालाई मारेर भागेर आउने या उनको अत्याचारबाट विस्थापित भएर नेपाल पसेका तिब्बती लामा भिक्षुहरु नै पछि तामाङ भएका हुन् भन्ने अनुमान केही लेखकहरुले अघिसारेका छन । तर तिब्बती इतिहासमा पाँईदैन । यो अनुमान अघिसारिनुको कारण ल्हासादेखि मुनितिर र नेपालको सिमाना, केरोङ भन्दा माथितिरको भूभागमा बस्ने तिब्बतीहरुको भाषा र केहि संस्कारहरु तामाङहरुसंग निकट एवं मिल्दोजुल्दो भएकोले हुनसक्छ । यही कारणबाट धेरै इतिहासकार तथा लेखकहरुले तामाङ जातिलाई सोङचेन गाम्पोको घोडचढी सेना *तमग* अप्रभंस भएर तामाङ शब्द उत्पति भएको हो भनेर अनुमान गर्दछन् । तर नेपालमा तामाङहरुको उपस्थिति त्यो भन्दा पहिले नै भएको इतिहासले देखाउँछ ।

बरु तिब्बतमा त्यो अत्याचारी राजा लाङदार्माको पूर्नरजन्म रुप आउन सक्ने भयले आफूलाई लाङदार्माको जस्तै रुप कालो जिब्रो भएको र टाउकोमा सिंङ नभएको देखाउन तिब्बतीहरु अभिवादन गर्दा निहुरिएर शिरको टोपी फुकाल्दै, जिब्रो निकालेर देखाउने चलन हालसम्म पनि कतै पाइन्छ ।





༣་ ཡམ་བུ

## याम्बु (काठमाण्डौ/काठमाण्डौं उपत्यका/नेपाल)
## Yam-bu=Kathmandu/Kathmandu Valley/Nepal

तामाङ जातिको तामाङभाषामा काठमाण्डौलाई याम्बु भनिन्छ। गोर्खाका पृथ्वीनारायणले राज्य विस्तार गर्नु पहिले काठमाण्डौ उपत्यका बाहिरका तामाङहरुले सिंगो उपत्यकालाई नै याम्बु भन्ने गर्दथ्यो। गोर्खा वा खसभाषामा याम्बुलाई नेपाल भनिन्थ्यो। गोर्खा राज्य विस्तार गरी बनेको हालको भूभागलाई नै गोर्खा राज्यको गोर्खा अधिराज्य नभनी विकसित काठमाण्डौ अधिराज्यलाई बुझाउने नेवारी शब्द नेपा र खसभाषा(गोर्खा)मा नेपालबाटै नेपाल अधिराज्य नामाकरण भएको हुनाले तामाङ भाषामा याम्बु भनेपछि त्यसले नेपाल भन्ने बुझाउँछ र खस भाषामा नेपाल भनेपछि तामाङभाषीहरुले याम्बु भन्ने बुझ्दछ।

खासगरी काठमाण्डौलाई बुझाउँन याम्बु शब्दको प्रयोग गरिन्छ। याम्बुलाई तामाङहरु *यम्बु, याम्बु, यम्पु, येन्पु , याम्पु, याम्बुलीङ* पनि भन्नेगरेका छन्। काठमाण्डौलाई तामाङ भाषामा याम्बु भनेर नामाकरण गरिएको पाउनुले यो उपत्यका तामाङहरुको पनि प्राचीन तथा ऐतिहासिक थलो रहेको कुरा पुष्टि हुन्छ।

तामाङ भाषामा याम्ब शब्दको उत्पति, इतिहास, प्रयोग र याम्बु भित्रको अन्य स्थानका तामाङ नामहरु निम्न अनुसार पाइएको छ।

༼ཀ་༽ ཡམ་བུ་ ཚིག་ལ་ ཁུང་ཁུ་བ་

# याम्बु शब्दको उत्पति

याम्बु शब्दको निर्माण अथवा उत्पति काठमाण्डौ उपत्यकाको भौगोलिक संरचनाको उत्पति संगसंगै भएको देखिन्छ। किनभने याम्बु शब्दको बु अलग शब्दले आदिवासी तामाङ जातिको तामाङ भाषामा खेत अर्थात धान रोपिने भूमि भन्ने अर्थ बुझाउँछ। यो शब्दले तामाङ भाषामा मात्र नभएर काठमाण्डौको तामाङ जस्तै अर्को आदिवासी जाति नेवारको भाषामा पनि उहीनै अर्थ बुझाउँछ। यस्तो खेत बुझाउने नाम शब्दहरु काठमाण्डौमा थुप्रै पाइन्छ। यसबारेपछि भिन्दै चर्चा गरिने छ।

भाषा वंशावली अनुसार काठमाण्डौ उपत्यकाको उत्पति पहिले तलाउ( पोखरी) थियो । उपत्यकाको तलाउको पानी बौद्ध बोधिसत्व ज्योतिषाचार्य फाबा ज्याम्याङ/ज्याम्पलयाङ(महामञ्जुश्री)ले आफ्नो राल्डी(खड्ग)ले चोभार कटुवाल डाँडा काटि पानी बाहिर पठाइ बस्न योग्य अर्थात खेती योग्य भूमिको निर्माण गर्नुको साथै शहर बसाइ त्यस शहरमा आफ्नै एक शिष्य लाई राजा बनाएर राखेको वर्णन छ।[15]

उपत्यकाको नाम याम्बु कसरी रहन गयो भन्ने सम्बन्धमा तामाङहरुमा विभिन्न धार्मिक एवं समाजिक दृष्टिकोण तथा अलग अलगै मतहरु पाइन्छ। तामाङ समाजमा पाइने मतहरु निम्न प्रकार रहेको छ।

ཀ་ ङ्याम्बु ग्योअी(नागदह) बाट याम्बु

ཁ་ यक्कोबु/ह्याङबु/ङ्याङम्बु (धेरै खेत, फराकिलो खेत, हाम्रो खेत) बाट याम्बु

ག་ येन्पु(लुगा तथा भाँडावर्तन पाउने, शहर) बाट याम्बु

---

[15] *मंजुश्री बोधिसत्वको आगमन र नागह्रदको जल निस्कनुः*-"त्रेता युगमै केही काल पश्चात् मंजुश्री बोधिसत्व महाचीन(चीन देश)-बाट स्वयंभू-ज्योतिको दर्शन गर्न भनी नाग-ह्रदको तटमा आए। तीन रात महामण्डपमा निवास गरी स्वयंभू-ज्योतीको दर्शन गर्न भनी नाग-ह्रदको तटमा आए। तीन रात महामण्डपमा निवास गरी स्वयंभूको दर्शन गरिसकेपछि उनको विचार नाग ह्रदको जल बाहिर निकाल्ने भयो र उक्त विचारअनुसार आफ्ना दुई शक्तिमध्ये 'वरदा'लाई फुल्लोच्च गिरिमा र 'मोक्षदा'लाई ध्यानेच्चो गिरिमा स्थापित गरी मंजुश्री स्वयं महामण्डपदेखि दक्षिणको कुनै पर्वतमा गएर बसे। तदनन्तर मंजुश्रीले नाग ह्रदलाई घेर्ने पर्वतमालाको निरिक्षण गरी कटुवाल नामक स्थानमा आफ्नो खड्गले काटेर जल निस्कने बाटो बनाए। वर्तमान वागमती निस्कने यस द्वारबाट वेग साथ जल निस्कंदानाग ह्रदको अधिपति कर्कोटकनागलाई पनि अन्य नागको साथै निस्कन लागेको देखा अनर्थको सम्भावना देखेकोले मञ्जुश्रीले उसलाई आग्रहकासाथ टौदह नामक जलाशयमा बास दिई नाग ह्रदमा भएको सम्पूर्ण वैभवको स्वामी बनाए। यस प्रकार जलाशयको जल निकालेपछि मञ्जश्रीले आदिबुद्धको ज्योतिर्मय रुप-स्वयम्भूको कात्तिक शुक्ल पूर्णिमाको दिन विराटरुपमा दर्शन पाए। आगामी पौष कृष्ण नवमीमा शक्तिरुपीणी गुह्येश्वरीको पनि उनले दर्शन पाए। प्रचलित विश्वस अनुसार सत्ययुगमा विपश्वी बुद्धले रोपेको अलौकिक कमल-बीजको मूल गुह्येश्वरीमा थियो र कमलासन स्वयम्भूको दर्शन वर्तमान स्वयम्भूमा भएको थियो। अद्यावधि गुजेश्वरीमा कुनै मर्ति नभएर केवल जलपूरित सानो छिद्रमात्र भएकोले यस कथनको पुष्टि भएको भनिन्छ।" बालचन्द्र शर्मा-*नेपालको ऐतिहासिक रुपरेखा-२०३३(संस्करण), पृ.५५-५६*

## ཀ་རྡང་མ་བུ་ གྱིའི་ ཡམ་བུ

## ड्याम्बु तलाउबाट याम्बु

काठमाण्डौ उपत्यका उर्वर भूमि बन्नु पूर्व विशाल लु ग्योओ / ग्ये(ड्याम्बुग्योओी)नाग दह थियो । त्यसबेला(त्रेतायुग) बोधिसत्व फाबा ज्याम्पेयाङ( महामञ्जुश्री) उत्तर चीनतिरबाट फाबासीम्बु ( स्वयंम्बु ज्योतिरुप)को दर्शन गर्न आइपुग्नु भएको थियो । तीन रात महामण्डुमा (नगरकोट डाँडा) विराज हुनुभयो । अनि ड्याम्बु ग्योओी (नाग दह) बीचको फाबासीम्बुको दर्शन गर्न ध्यान बस्नु भयो र ड्याम्बु ग्योओी(नाग ह्रद)को पानी सुकाएर फाबासीम्बुको दर्शन गर्न सकिने विचार गर्नु भयो ।



दुई खाण्डोमाहरु मध्ये एक जना ('बरदा')लाई फुल्लचो र अर्का ('मोक्षदा')लाई ध्यानाच्चो गाङमा स्थापित गर्नु भइ यो ड्याम्बु ग्योओी(नाग दह)को वरिपरिको गाङहरु उत्तरमा गोकर्ण, मध्यमा आर्यघाट, दक्षिणमा चोभार गाङ आदिको निरिक्षण गर्नु भयो र कटुवाल गाङ आफ्नो राल्डी(खड्ग)ले काटि ड्याम्बु ग्योओी (नाग दह)को पानी बाहीर पठाउनु भयो (फुटनोट-१५मा हेर्नुहोस्)। पानीसंगै ड्याम्बु ग्योओी(नाग ह्रद)को लु ग्ले(नागराजहरु) पनि बाहिर निस्केर जान लागेको देख्नु भएपछि नाग राजाहरु रिसाएर अनिष्ट नहुन भनि आदर सम्मानसाथ कार्कोटक, टक्कायक र कुलिक ड्याम्बुहरुलाई टौदह, धनदह र ह्राशा तिर्थको सृजना गर्नु भई ड्याम्बु ग्योओी(नाग ह्रद)मा भएको सम्पूर्ण वैभवका अधिपति नागर ाजहरुलाई नै स्वामी बनाउँनु भयो। कार्तिक शुक्लपक्ष पूर्णिमाका दिन फाबा ज्याम्पेयाङले सीडकुन फाबा सीम्बु (महाज्योतिरुप स्वयम्भु)को दर्शन पाउँनुभयो । त्यसपछि केहीकाल बस्नुभइ मञ्जुपतन नामक शहर बसाउनु भयो । सो शहरमा धर्माङकार नामको एकजना आफ्नो शिष्यलाई राजा बनाउँनु भयो ।

यस प्रकार ड्याम्बु ग्योओी(नाग ह्रद)को पानी सुकाएर उपत्यकाको निर्माण फबा ज्याम्पेयाङले गर्नु भएको हुँदा ड्याम्बु ग्योओीबाटै उपत्यका (याम्बु) भूमि बनेका वर्णन नेपाल उपत्यकाको वंशावली तथा स्वयम्भू पुराण, ग्यालयुल राङज्युङ छ्योर्तेन छेन्पोओी कारछ्याग स्युग्स्ह्यो आदि पुस्तकमा वर्णन गरिएको पाईन्छ ।[16]

---

[16] -परशुराम तामाङ,- श्री स्वयम्भूज्योती रुपको उत्पति र तामाङ जनजाति, छारम्हेन्दो,पृ .११, वर्ष-३, म्हेन्दो-१५, नेपाल तामाङ घेदङ, जेठ २०५१ (१९९४)

- नारायण सिंह लामा, हेटौडा-१०, याम्बु ' ऐ ऐ छारम्हेन्दो-पृ- १०जेठ, २०५१(१९९४)

## ༼ཁ་༽ ཡཀྐོ་བུ་ཿཧྱང་བུ་ཿངྱང་བུ་གུམ་ ཡམ་བུ་

## *यक्को-बु/ह्याङ-बु/ङ्याङबुबाट याम्बु*

फाबा ज्याम्येयाङले उपत्यकाको तलाउको पानी सुकाइ सकेपछि उर्वरा माटोको समतल र उब्जनीको दृष्टिकोणले सर्वोत्कृष्ट भूमि बन्यो । मानव बस्तीको साथसाथै उर्वरा भुमि खेतहरुको निर्माण हुन थाल्यो । प्रागैतिहासिक पुरातात्त्विक प्रमाणहरुले यो उपत्यकामा प्रथम आवाद गर्ने मंगोल जाति भएको बताइएको छ । याम्बुको मंगोल मूलका आदिम मानव तामाङ जाति हुन् । यो कुरा लिच्छविकाल, मल्लकालको अभिलेखहरुमा प्रचुरमात्रमा तामाङ भाषाको शब्दहरु पाइएकाले पनि तामाङ जातिको याम्बु(काठमाण्डौ)संग प्राचीनकालदेखिको सम्बन्ध रहेको देखाउँछ ।

तामाङ भाषामा काठमाडौंको मात्र होइन उपत्यकाको मूख्य भूभाग तीनै शहरको नामाकरण गरिएको पाइन्छ । जसको शब्दरुप नेवार भाषासंग पनि मिल्छ । तामाङ भाषामा पाटनलाई 'हेराङ' तथा 'योलोङ' र भक्तपुरलाई 'खोपोङ' भनिन्छ । यो बाहेक उपत्यका भित्रको *जामाचो, फुलचो, पुल्चो* आदि पनि तामाङ भाषाको नाम हो । चो (लाई तामाङ भाषिकामा जो/थो पनि भनिन्छ) भनेको अग्लो, उच्च, उचो स्थान भन्ने बुझाउँछ ।

यसरी नै यहाँका बासिन्दाले उपत्यकाको शहर तथा भुमिहरुको नाम आफ्नो भाषामा नामाकरण गरेका छन् । यस्तो नामाकरण जहाँ जुन जातिको बाहुल्यता रह्यो उनीहरुकै भाषामा राखेको इतिहास सर्वत्र पाइन्छ । यहाँ खेति योग्य भुमिहरुको चर्चा गरौं ।

काठमाण्डौ उपत्यकाको भूबनोट उर्वरा र समतल हुनुको साथै यहाँ भित्र दर्जनौ नदी नाला, खोला खोल्चीहरु (च्यानस्योङ, छेकुस्योङ, सेमस्योङ, सामा स्योङ, माकार स्योङ) रहेकाले धान खेतीको लागि सर्वोतम् भूमि खेतहरु बनेका छन् । तामाङ भाषामा र नेवार भाषामा खेतलाई बु भनिन्छ अर्थात बु/बुं भनेको पानी लाग्ने सर्वोत्कृष्ट उर्वरा भूमि (खेत) हो ।

उपत्यकामा पर्याप्त पानी उपलब्ध हुने धुप्रै खेतहरु रहेको कुरा सीम्बु, गोंगबु, खुसीबु, लुबु, बलम्बु, सैंबु, थैबु आदि नामबाट नै थाहा पाउन सकिन्छ । यसरी धेरै खेत भएकोले यो भूमिलाई नेवार भाषा यक्को-बु भनेर भनेको हुन सक्छ, नेवार भाषामा मात्र नभएर काठमाण्डौ नजिक बुढीगण्डकी, त्रिशूली तथा काठमाण्डौ नजिक ककनीतिरका तामाङ भाषामा पनि यक्कोले धेरै नै बुझाउँछ । तसर्थ *यक्को बु - यक्को बु* भन्दा भन्दै यम्बु/याम्बु मात्र भन्न थाले भन्ने तामाङ बुढापाकाहरुको

कहावत सुनिन्छ ।

यसैगरी नै बुढीगण्डकी, त्रिशूली भेगका तामाङहरु उपत्यकालाई फराकिलो असल उब्जाउ दिने खेतको अर्थमा ड्याङ्बु/ह्याङ्-बु भएको ठाउँ भएकोले शहरमा किनमेल बेच-बिखन गर्न आउँदा नाम थाहा नहुँदा ह्याङ्ब भन्ने गर्दथे, पछि यही ह्याङ्बुबाटै पछिपछि *याङबु - याङ्बु* भन्न थाले र यसैबाट शब्दको रुप बदल्दै याम्बमात्र भन्न थालेका हुन ।

मेरो विचारमा पनि उपत्यकामा प्रशस्त खेतहरु भएकोले नै ह्याङ्बु(फराकिलो खेत), ह्याङ्ला-बु/ड्याङ्ला-बु(हाम्रो खेत) तथा यक्को-बु (धेरै खेत), ड्योमड्योम्वा-बु(मलीलो मोटो युक्त खेत) आदि शब्दहरुबाट नै उपत्यका वा काठमाण्डौको नाम तामाङ भाषामा याम्बु रहन गएको हो ।[17] किन भने माथि वर्णन गरिएको नागह्रद र नागको सवालमा तामाङ भाषामा नाग लाई लु वा ला-लु र सर्पलाई पुखी भनिन्छ । ड्याम्बु तामाङ भाषाको तिब्बती भाषा निकट शब्द हो । यहाँ तिब्बती भाषामा बु ले पुरुष बालक वा राजकुमार बुझाउँछ । तसर्थ ड्याम्बुले नाग राजाको पुत्र वा मत्स्य राजाको पुत्र भन्ने बुझाउँछ । अर्को उपत्यका तथा स्वयम्भूको उत्पतिका वर्णनहरु तथा वंशावली पनि मल्लकालमै रचिएको हो । त्यसैले ड्याम्बु शब्द १२ औं- १४ औं शताब्दी बीचमा प्रयोगमा आएको शब्द हो, भने त्यो भन्दा दुई शताब्दी अगाडी नै उपत्यकामा तामाङ शब्द याम्बु (सन १०३९, गंगालाल श्रेष्ठ/स.टा.ने.स.१११७)मै भेटिएको छ । त्यसकारण उपत्यकाको भौगोलिक तथा ऐतिहासिक प्रमाणहरुको आधारमा तामाङ भाषामा बु (खेत) बुझाउँने शब्दबाट तामाङ भाषाको याम्बु (काठमाण्डौ/अहिलेको नेपाल बुझाउँने) शब्दको जन्म भएको तर्क पनि उत्तिकै बलियो रहेको छ ।

उपत्यकाको नाम तामाङ भाषामा मल्लकाल पूर्व नै याम्बु भन्ने पाइनुले उपत्यकामा तामाङहरुको अस्तित्व त्यो समयमा प्रबल रहेको संकेत दिएको छ । भने अर्कोतिर तामाङ इतिहासकारहरुलाई तामाङ जातिको इतिहासका बारेमा खोजी गर्न अझै मल्लकालदेखि पूर्व-उत्तर लिच्छवि काल भनिएका ऐतिहासिक कालको गहिराइसम्म पुग्नुपर्ने मार्ग पहिल्याइदिएका छन् ।



---

[17] *अजितमान तामाङ*- 'तामाङ भाषामा याम्बु (नेपाल)' -पृ.२२-२३, छारल्हेन्दो वर्ष-२, अंक- ११-१२, नेपाल तामाङ घेदङ सन् १९९२

(फाबा सीम्बु गाङसे प्राङबा याम्बु) (कु-पार-१४)

## ༼ག་༽ ཡེན་པུ་བྲམ་ ཡམ་བུ་

## *येन्पु बाट याम्बु*

याम्बु शब्दको उत्पति सम्बन्धमा पश्चिम १ नम्बर क्षेत्रमा तामाङहरुमा अलि भिन्नै मत पाइन्छ। उनीहरुका अनुसार याम्बको अर्थ शहर हो। पहिले नुन लिन तिब्वतको केरोङ अथवा मकवानपुरको भिमफेदी पुग्नु पर्दथ्यो। लुगा केहीमात्रामा आफ्नै गाउँमा बुनिन्थ्यो। धातुका भाँडा वर्तनहरु प्राय आफ्नो गाउँबस्तीमा नबन्ने भएकोले लिन उपत्यकामा नै आउनुपर्थ्यो। उपत्यकामा लुगा लगायत धातु माटाका भाँडाकुँडा बन्थ्यो। त्यहाँ तामाङ भाषामा लुगालाई येन र भाँडाकुँडालाई प भन्दछन्। काठमाण्डौ जानुको अर्थ *येन* र *पु* लिन जानु भन्ने हुन्थ्यो त्यो बाहेक अरु कामको निम्ति जाँदैनथ्यो। उनीहरु येन र पु पाउने ठाउँ भएकाले उपत्यकालाई येन्पु भन्ने गर्दथे। यही *येन्पु* नै *यम्बु* हो भन्ने गर्दछन्। यस्तै अर्को उदाहरण-तामाङहरु अहिलेको त्रिशूली बजारलाई पनि पहीले त्रिशूली गंगा तर्ने चाम(साँघु) भएकाले त्यो बजारलाई आफ्नो भाषा भन्दा अझै 'चामकी छोङरी नीबा' साँघु बजार मा जाने भन्दछन।

यसप्रकार जहाँ जसरी नाम रहन गए पनि याम्बु भन्ने शब्द तामाङ भाषाको तत्कालिन काठमाण्डौलाई र हालको काठमाण्डौं उपत्यका अनि नेपाल भनेर बुझाउँन आज भन्दा हजारौं वर्ष पहिलेदेखि प्रयोग भैआएको कुरा उपरोक्त चर्चाबाट स्पष्ट भएको छ।

༣་ ཡམ་བུ་ ཚིག་ལ་ གཏྲ་བ་ཀའི་རྐྱན

# याम्बु शब्दको ऐतिहासिकता

तामाङ भाषाको स्थान संज्ञा(नाम) याम्बुको प्रयोग ऐतिहासिक दृष्टिकोणले तामाङ शब्द भन्दा जेठो पाइएको छ। नेपालमा तामाङ शब्द १२ औ शताब्दीको अन्त र १३ औ शताब्दीको आरम्भतिरनै मुस्ताङ क्षेत्रमा जातिवाचक शब्दको रुपमा प्रयोग भएको पाइएको थियो भने तामाङ भाषाको याम्बु शब्द त्यो भन्दा पनि पुरानो देखिएको छ। याम्बु शब्दको इ.पू ४१६ मा जन्मिएको(एच एच रिश्ले : १९२८ :६) तिब्बतका प्रथम राजा नाठी स्हङबोको दरवारको नामाकरणमा प्रयोग भएको छ। जो ल्हासा नजिकै पर्दछ त्यसलाई हाल पनि याम्बु लाखाङनै मनिन्छ। यसलाई हेर्दा याम्बु शब्द २५०० वर्ष अघिदेखिनै प्रयोग भइ आएको छ। यसले तामाङहरुको इतिहास पनि त्यतिनै पुरानो हुन सक्ने अनुमान लगाउन गाह्रो पर्दैन। यसलाई १० औ शताब्दीपछि याम्बुशब्दको प्रयोग व्यापक भएको तथ्य काठमाण्डौ उपत्यकामा भेटिएको बिभिन्न शिलालेखहरुको हरुको निरन्तरताले पुष्टि मिल्दछ।

"यो शब्द खास गरेर सन १०१०(रेग्मी:२०५१: ९६)सालदेखि अधिकांश शिलालेखहरुमा प्रयोग गरिराखेको पाइएको छ भने अन्तिम मल्ल राजा जयप्रकाश मल्लको समयमा स्थापना गरेको अभिलेखमा समेत यो शब्द प्रयोग भएको भेटिएको छ। काठमाण्डौमा स्थापना गरिराखेको अभिलेखमा 'श्रीयम्बु' 'श्री महानगर यम्बु भूमो' यम्बुक्रमायाा आदि तामाङ शब्द प्रयोग भएको पाइएको छ।'...'अझ एउटा दुईटा मात्र शिलालेखमा होइन दशौ शताब्दीपछि काठमाण्डौमा जति पनि अभिलेख छ तीनिहरुमा प्राय जसो सबै तामाङ भाषाका शब्दहरु प्रयोग गरि राखेको छ।"[18] तामाङ भाषाको याम्ब शब्दले पनि तामाङ जातिको प्राचानता र ऐतिहासिकतालाई प्रमाणित गरेको छ भने काठमाण्डौमा तामाङहरुको उपस्थितीको प्रमाण दिएको छ। नेपाली इतिहासले स्पष्ट पार्न नसकेको याम्बुक्रमा र याम्बुब्रुमा को अर्थ तामाङ भाषामा लाग्दछ। याम्बुक्रमाको अर्थ चारैतिर/ वरिपरि र याम्बुब्रूमाको अर्थ गुचुमुच्च/बाक्लो घर भएको बस्ती भन्ने लाग्दछ जसले गर्दा ती उल्लेखित याम्बु क्षेत्रमा तामाङहरुको प्रभुत्व रहेको अनुमान लगाउँन सकिन्छ।

---

[18]-डा.जगदिशचन्द्र रेग्मीका"...लिच्छीवं कालको कोलीग्राम मध्यकालमा याम्बुको रुपमा परिवर्तित भएको देखिन्छ ...याम्बुनामले मखनटोलको हाराहारीदेखि ठहिटीसम्मको उत्तर पट्टिको शहरी भेगलाई अर्थ्याउँ भन्ने कुरा विद्वानहरुले मानेका छन्।... यो कुरालाई स्पष्ट अभिभलेखिक सन्दर्भहरु पनि पाइन्छन ।...ई.११९३ को प्रमाणमा मखनटोललाई याम्बु अन्तरगत मानिएको कुरा लेखिएको पाईन्छ. ई १५४५ को प्रमाणले टेबहाल याम्बु अन्तरगत मानिन्थ्यो। *काठमाण्डू शहर सांस्कृतिक अध्ययन-२०५१*-उं९-६१०३ -*गंगालाल श्रेष्ठ* -स्वनिगलं छाय् पिहां वनेमाल तामाङत ? सन्ध्या टाईम्स न्हिपौ, नेपाल सम्वत ११७ तछलाथ्व ८ शुक्रवारया तंसापौ मा प्रकाशित नेवार भाषाको 'तामाङहरु किन उपत्यकाबाट बाहीर जानु पऱ्यो ?' भन्ने लेखबाट उद्धृत नेपालीमा अनुवाद ।

## ༣ ཡམ་བུ་ ཚིག་ལ་ ཚོད་པ་ याम्बु शब्दको प्रयोग:

तामाङ भाषाको मौलिक नाम शब्द याम्बुको प्रयोग कहिलेदेखि भयो भन्ने स्पष्ट नभए पनि याम्बु शब्द तामाङ वंशावलीहरुमा उल्लेखित स्थानहरुसम्म प्रयोग भएको पाइन्छ । तिब्बतको ल्हासा नजिक (याम्बुलाखाङ भनेर) सिगात्चेसम्म पनि याम्बु शब्द प्रयोग भएको पाइएको छ । पश्चिममा काश्मिरदेखि पूर्वमा दार्जीलीङ, सिक्किम, अरुणाञ्चल प्रदेश, भ्होटाङसम्म पनि याम्बु स्थान नामशब्दले नै काठमाण्डौलाई चिनिन्छ। नेपालको अधिकांश तामाङसमूहका जातिहरु थकाली, मनाङ्गे, ल्होपा, गुरुङ, शेर्पा, ह्योल्मो, लेप्चा, भोटिया आदि जातिहरु पनि काठमाण्डौलाई चिन्न याम्बु शब्दकै प्रयोग गर्ने गरिएको पाइन्छ। यी आदिवासी/जनजाति समुदायहरुमा याम्बुशब्दले काठमाण्डौलाई मात्र नबुझाएर सिंगै नेपाल बुझाउँन पनि याम्बु शब्दको प्रयोग भएको छ जस्तै:- नेपाल शेर्पा संघलाई बुझाउँन '*याम्बु शेर्पा चीछोग*' लेख्ने गरिन्छ ।

## ༤ གླེ་ ཚིག་ལ་ ཀ་རྒྱལ་ ཐེན ཁྲུང་རྒྱལ་

## ग्ले (घले = राजा) शब्दको उत्पति र प्राचीन इतिहास
## (Orign & History of gle=ghale/KING)

तामाङ राजा र अधिराज्यको (ग्लेसा/ग्याल्साको) कुरा गर्दा ग्ले शब्दबारे जान्नु राम्रो हुन्छ । तामाङ भाषामा राजालाई ग्ल भनिन्छ ।[19] तिब्बती भाषामा *ग्याल्पो* भनिन्छ । तामाङ भाषामा ग्लेको शासन क्षेत्रलाई ग्लेसा भनिन्छ भने तिब्बती भाषामा ग्याल्सा भनिन्छ । तामाङ जातिको वंशावलीमा ग्ले, ग्याल्सा, ग्याल्पो शब्दको प्रचुर प्रयोग भएको पाइन्छ । तामाङ भाषाको ग्ल शब्द खस भाषीहरुले तामाङ भाषाको *ग* ध्वनीलाई *घ* उच्चारण गर्ने भएकोले *ग्ले वा गलेबाट महाप्राण भई घल* भएको हो ।[20] ग्लेलाई खस भाषि बाहुन क्षेत्रीहरुले होच्याएर *तामाङ ग्ले* (तामाङ राजा) नभनी *घलेभोटे (राजाभोटे = भोटेराजा)* भन्ने गरिन्थ्यो ।

---

[19] "तामाङ भाषामा राजालाई ग्ले भनिन्छ । घले शब्द यहि ग्ले शब्दबाट व्युत्पत्ति भएर बनेको हो । " *धर्मरत्न शाक्य*- नुवाकोट जिल्लाको संक्षिप्त इतिहास-, .(.The king is called 'glay' in Tamang Language. The word 'ghale' has been derived from ' gle'- A short history of Nuwakot.) – Bomtang Doc.-1994.

[20] *अमृत योन्जन*, स्योम्भो वर्ष-७, पूर्णाङ्क-१४,को पृ.७-आक्षरिक विभेदले उब्जाएका समस्याहरु "…..तामाङ भाषामा पाईने आक्षरिक प्रकार स्वर-स्वर तथा व्यन्जन- व्यन्जन-स्वर-स्वर नेपालीमा नभएकाले तामाङ शब्द ग्ले लाई ग-ले बनाए । यही गले महाप्राण भएर घले भन्न थाले ….।"

यो ग्ले शब्दबाट ग्ले र खाङबाट *ग्लेखाङ*, ग्ले र सा *ग्लेस*/ अर्थात *तामाङ राज्य* बुझाउने शब्द निर्माण भएको छ। ग्लेठीम, ग्याल्ठीम राज्यको नियम तथा विधान भन्ने हुन्छ।

'पश्चिम एक नम्बर क्षेत्रमा तामाङ ग्ले(राजा)हरुले स्वतन्त्र राज्य संञ्चालन गरेको तामाङ प्रागैतिहासिक कथनहरुमा(Tamang Prehistoric Story) पाइन्छ। ती भूभागहरुमा प्रथम मानव बस्ती बसाल्ने(स्थानीय भाषामा नाम्सा चुबा, सीम्राङ फेबा, वु-देबा) जाति वा मानव समुदाय ( Oldest Inhabitants) पनि तामाङ भएको कुरा त्यस क्षेत्रको सम्पूर्ण गाउँहरुको नाम, खोला नाला, डाँडा, हिमाल, सम्पूर्ण बनस्पति आदिको नाम तामाङ भाषा मै भएको पुष्टि मिल्दछ। तामाङ भाषामा राजालाई ग्ले (घले) भनिन्छ भने यहाँका तामाङ बस्तीहरुलाई ग्ले(घले) राज्य वा तामाङ अधिराज्यको रुपमा चिनिन्छ। यी तामाङ राजाहरुको (ग्लेहरुको) सन ६४० ई.तिर पनि स्वतन्त्र राज्य थियो। जून बेला तिब्बतको राजा सोङ्चेन गाम्पोको नेपालकी राजकुमारी भृकुटीसंग विवाह भएको थियो'।[21]

'सन् १६०६ मा रामशाह गोर्खाको राजा भएपछि उनले आफ्नो २७ वर्षे राज्यकालमा राज्यविस्तारको क्रममा थुम्ता ग्ल, चाङग्ये ग्ल, सुल्तानलाई मारेर बार पाकह्री, स्यार्ता र १८०० खोला राज्यहरु गोर्खाराज्यमा गाभेको थिए। त्यसमा पुरानो पश्चिम एक नम्बरको सम्पूर्ण भूभाग हालको नुवाकोट, धादिङ र रसुवा जिल्लाको अधिकांश क्षेत्र पर्दथ्यो, जुन नेपाल(याम्बु), फिर्केप र तिब्बत राज्यहरुमा जानेबाटो( महत्वपूर्ण नाका) थियो। तत्कालीन यो क्षेत्र अर्थात धादिङ ईलाकामा *ह्रोही दाश* ग्लको राज्य थियो। यो तामाङ ग्लेको राज्य पनि १५९८ देखि १६३० सम्मको गोर्खाली आक्रमण परि गोर्खामा गाभिएको थियो' *(धर्मरत्न शाक्य-बोमताङ डक-सन् १९९४)*। तर पनि पश्चिम १ नम्बरको केही भागमा नर भूपालशाहको पालासम्म तामाङ ग्ले(घले)राज्यको अस्तित्व रहेको कुरा सन् १७३९ घलेभोटेहरुसंग युद्ध[22] भएको कथनले संकेत मिलेको छ।

---

[21] धर्मरत्न शाक्य- नुवाकोटको संक्षिप्त इतिहास -बोमताङ डक- सन् १९९४

[22] यो युद्धलाई डेभिड होल्मबर्गले १७३९ मा घले भोटे फौज(ग्ले फौज/भोटे राजाको फौज) अर्थात स्थानीय तामाङ ग्ले(राजा)संग नरभूपाल शाहको फौज बीच विवाद वा युद्ध भएको कुरा धनबज्र बज्राचार्य तथा टेक बहादुर श्रेष्ठको 'नुवाकोटको ऐतिहासिक रुपरेखा-२०३२' नामक पुस्तको हवाला दिएर आफ्नो पुस्तक Order In Paradox, Introduction to South Asian Edition को पृष्ठ XIIIमा उल्लेख गरेका छन।

नोट:- भोट बर्मेली भाषाको ग, ज, ड, द, ब ध्वनीको खस नेपाली भाषामा घ, झ, ड, ध, भ ध्वनीमा परिवर्तन हुन्छ तसर्थ तामाङभाषाको ग्लानलाई खसनेपालीभाषामा घलान(घ्यान), त्यसैगरी जामेलाई झामे, डोबालाई ढोबा, दाबालाई धाबा, ब्लोनलाई भोलोन (भ्लोन), ब्रोटाङलाई भोटाङ, बोतलाई भोट,जामेलाई झामे, गाङलाई घाङ आदि।

तत्कालिन तामाङ ग्ले(राजा)हरुको विहेवारी(कुटुम्बेरी) तामाङ राजघरानामा नै हुने गरेको भेटिएको छ। तामाङ जातिमा विभिन्न गोत्रको पारिवारिक उपथरहरु हुन्छन्। त्यसलाई तामाङहरु थेत् (स्वाँग /सगोत्रीय) भनेर छुट्टाउँछन्। तामाङ र ाजघराना भित्र यस्तो विभिन्न गोत्रका वा ह्रुअीका ग्ले(घले=राजा) वंश पाइन्छ। जस्तै (१) कुखुरा, भैंसी र गोरुको मासु नखाने *सुरत ग्ल, ग्याल्दाङ ग्ल* र *ग्याजारोङ ग्ले* (२) कुखुरा, गोरु, भैंसी र बोकाको मासु नखाने *नामसिङ ग्ल*, (३) मात्र गोरुको मासु नखाने ग्लेहरुमा *दाम्के, गोम्जा* (बोङजो) र *ईमान ग्ल* छन्। यस्ता तिन समूहका ७ गोत्रीय तामाङ राजा(ग्ले)हरु रहेका छन।

तामाङ ग्ले(घले=राजा)ले राज गरेको क्षेत्रको तामाङ भाषामा ग्ल (ग्याल्बो) वा राजाहरुलाई भिन्दै आदरवाची, राजभाषा समेत प्रयोग भएको पाइन्छ। जस्तै: ग्ले (राजा)ले भन्नु भयो भन्नु पर्दा "ग्लेचे काटोल्जी", "ग्लेचे छ्योत्जी" (राजाले भोजन ग्रहण गर्नु भयो)। यस्तो आदरवाची राजभाषाहरु प्राय: लोप हुने क्रममा छन।

माथि वर्णन गरिएका बाहेक तामाङ ग्लेहरु अन्यत्र पनि तामाङ बस्तीहरुमा रहेको मौखिक इतिहासहरुमा पाइएको छ। यी ग्ले राज्यहरु रहेको विभिन्न स्थानमा अझै ग्लेहरुको ग्यल्खाङको भग्नावशेषका रुपमा रहेका छन्। जस्तै- रुम्बा ग्ले नुवाकोटको ककनी, ग्हीसीङ ग्ले रामेछापको दोरम्बा ताल्ज्युमा, बल या दोङ ग्ले काभ्रेको तेमालमा, अुअीबा ग्ले धादिङको सेमजोङमा आदि र ग्ले थरका तामाङहरु अझै आफूलाई तामाङ जातिको राजवंश, राजाको सन्तान श्रेष्ठ (उच्च) तामाङ भनेर दावी गर्ने गर्दछन्।

३ ९८ **जोङ** (zong/Head quater or Capital City)

तामाङ राजा र अधिराज्यको कुरा गर्दा जोङ शब्द संगसगै प्रयोग भएको पाइन्छ। तामाङ ग्ले र ग्लेसा रहेको प्राय: सबै स्थानहरुमा जोङ रहेको हुन्छ। जोङ शब्द तिब्बती भाषामा पनि प्रयोग भएको पाइन्छ। तिब्बती शब्दकोश अनुसार जोङको अर्थ सदरमुकाम, राजधानी, निश्चित बस्तु वा केही न केहीको लागि प्रसिद्ध प्रदेश, क्षेत्र, इलाका आदि हो। तामाङ ग्लेसाहरुको खोजी गर्दा जोङ भएको प्राय इलाकामा राजा र तामाङ राज्य भएको मौखिक इतिहास पाइन्छ। तामाङ भाषामा पनि जोङले राज्य प्रशासन संञ्चालन गर्ने केन्द्र भन्ने बुझाउँछ।

'किरात इतिहास' भन्ने पुस्तकमा इमानसिं चेम्जोङले जोङको अर्थ कतै दरवार र कतै गढ भनेका छन। तर प्राचीन तामाङ जातिका वस्ती तथा प्रदेशहरुमा जतातते अग्लो टाकुरोमा जोङहरु रहेका छन्। तामाङ भाषामा टुप्पो, वा उचो स्थान बुझाउने चो शब्दको जो र थो भाषिकाहरु पाइन्छ। तापनि ती सबैको खस(नेपाली) भाषामा अर्थ्याउँदा *शिर/सिरान/माथिल्लो/ टुप्पो/उच्च अग्लो* आदि अर्थ लाग्छ। प्राचीन तथा पुरानो राजाको दरवार(आवास) तथा राजधानी रहने स्थान प्राय: अग्लो जा वा जोङहरु मै रहेको पाइन्छ। त्यसलाई तामाङ भाषामा चोङ/जोङ भनिन्छ। चोङले तामाङ भाषामा उचो अग्लो तथा चनाखो स्थान भन्ने बुझाउँछ। ती चोङ वा जोङहरुमा बस्नेहरुलाई बुझाउनु पर्दा गोल्जोङपा, सेमजोङपा, लामजोङपा, डेन्जोङपा भनेर पुरानो तामाङ भाषामा पाइन्छ।

तिब्बती भाषामा नेपालका काठमाडौ, सिक्किम र भोटाङमा बस्नेलाई उनीहरु रोङजोङपा अर्थात रोङ देशको 'राजधानीबासी' भन्दछन्। यस्तो जोङहरु भएको स्थानहरुमा आजभोली पनि तामाङ बस्तीको नाम तिनै जोङहरुको नामबाट रहको तामाङ जातिको प्राचीन बसोवास क्षेत्रहरुमा पाइन्छ। जस्तै:- धादिङ जिल्लाको सेमजोङ, चिलिङजोङ, बोमताङको जोङदीली, सेल्करजोङ, रसुवाको गोल्जोङ, डाकार जोङ, गोरखाको सीम्जुङ(सीमजोङ) लमजुङको लामजोङ आदि।

जोङ भएका उपरोक्त क्षेत्रहरुमा अद्यावधि तामाङ जातिको बस्ती पाईन्छ। तामाङ अधिराज्यहरुको खोजीगर्दा पनि जोङले राजधानी, प्रदेशको केन्द्र, राज्यको विभिन्न प्रशासन संञ्चालन केन्द्र भन्ने बुझिन्छ। जोङहरुबाटै ग्लेहरुले आफ्नो ग्लेसा/ग्याल्सा सन्चलान गर्दथे। धादिङ जिल्लाको सेम्जोङमा अुीबा(वाअीबा) राजाको राजाधानी थियो र 'डाप्साङचो' ग्लेखाप(ग्याल्खाङ/राजदरबार) थियो। त्यहाँ अझै भग्नावशेषहरु हेर्न पाईन्छ।

## ८· གྲོང་ ग्रोङ वा रोङ(गुरुङ) शब्दवारे

## (GRONG or RONG / GURUNG)

तामाङ भाषामा ग्रोङ वा रोङले गुरुङ बुझाउँछ । प्राचीन तामाङ क्षेत्रमा गुरुङलाई छुट्टै जाति भनेर लिईदैन । माङ युल अर्थात तिब्बतको केरोङ अर्थात लाह्री, लाप्साङकार्पो (गणेश) हिमालदेखि दक्षिण, बुढी गण्डकिदेखि पूर्व, त्रिशूली गंगादेखि पश्चिम र दक्षिणमा यी दुई नदीको दोभानदेखि माथिको क्षेत्रमा तामाङहरु गुरुङलाई छुट्टै जाति मान्दैनन, तामाङ भित्रकै एउटा उपनाम वा उपथर *ग्रोङ* समूहको रुपमा लिइन्छ अर्थात यहाँ *ग्रोङ* वा *रोङले* गुरुङ बुझाउँछ ।

यो उपनाम वा उपथरलाई स्थानीय तामाङ भाषामा 'वाओ' भनिन्छ । तामाङ समाजमा उपनाम वा उपथर राख्दा ग्रोङ र रोङ राख्न पाउने तामाङ थर हरुलाई दुई समूहमा छुट्याएको हुन्छ । यो प्रथा अझै पाईन्छ । त्यसमा एक थरी. लामा पढन हुने समूह अर्थात लामाकोन्ज्यो कूलमान्ने थरहरु जस्तै *योन्जन, लोप्चन, ब्लेन्देन, चोथेन, स्योङथेन, बम्जन* आदि र आर्को लामा पढन नहुने समूह अर्थात लामा कोन्ज्यो बाहेकका कूल मान्ने थरहरु जस्तै:- डीम्डङ्, हीम्डङ्, मम्बा, *बल, दोङ, वाओबा, गोले, बच्यु, ग्हीसीङ, मोक्तान, पाखरिन, ब्लोन* आदि । तर हिजोआज सबै थरकाले सराबरी लामा पढने भइसकेका छन् । पहीलेको पश्चिम १ नम्बरका तामाङ वस्तीहरुमा ठिटौलीमा यस्तो वाओ(उपनाम) राख्ने प्रथा व्यापक रुपमा पाइन्छ ।

त्यसरी उपनाम राख्दा लामा हुने थरकाहरुले उपनामको पछाडि "लामा र लमा" राखिन्छ भने लामा नहुने थरहरुले "ग्रोङ वा रोङ" वाओी (उपनाम)को पछाडि राख्ने गरिन्छ ।

यो प्रथा हालको धादिङ, नुवाकोट तथा रसुवा जिल्लाका गाउँहरु मानेगाङ, फिकुरी, बल्ची, काअुले, स्याङगाम, बोमताङ, दोलेप, देअुली, ओखेनी, फासाङ, कीमताङ, दाङसीङ, गोरस्याङ, दुङदुङ, बर्सुन्चेत, सेमजोङ, गाओीरा, माओीबोल, दार्खा, जारनाङ, बोराङ, सेर्तुङ, गोल्जोङ, गालाङ, हाकु आदि गाउँहरुमा पाईन्छ । वाओी (उपनाम)का केहि उदाहरणहरु:-

*(क) लामा कोन्ज्यो कूलमान्ने र लामा र लामो वाओी -उपनामहरु) :-*

उर्चालामा, सुर्चालामो, खेचालामा, पीङचालामा, नीमालामो, येन्जालामा, पेलामो, मार्चालामा, फाओीलामा, मेन्चालामो, सेल्चा लामा, दाम्जा लामा, गेसा लामा, ग्याजा लामा आदि

*(ख)लामा कोन्ज्यो कूलमान्ने बाहेकका र ग्रोङ वा रोङवाओी (उपनामहरु ):-*

सेल्चारोङ, अुओीनारोङ, भगुरोङ, माररोङ, खीग्रोङ, उर्चारोङ, पेडारोङ, गेसा रोङ, बेरोङ, मच्चारोङ, मैरोङ, मेन्चाग्रोङ, दाम्जा रोङ, चीचा रोङ, सीर्चारोङ आदि ।

यसप्रकारको तामाङ जातिमा भएको वाओी(उपनाम) प्रथा अनुसार रोङ र ग्रोङ नै गुरुङ हो । तामाङको जस्तै गुरुङ जातिमा पनि दुई समूह रहेको कुरा इमानसिं चेमजोङको किरात इतिहास संस्कृति पुस्तकमा दिएको, गुरुङ वंशावलीले प्रमाणित गर्दछ (हेर्नुहोस् तल फूटनोटमा)। त्यसकारण तामाङका समुदाय भित्रको ग्रोङ वा रोङ वाओी(उपनाम) धारी तामाङहरु नै पछि GRONG or RONG = GRUNG गुरुङ भएको कुरामा शंका रहेने छैन् । तर आजभोली भने यसभेगका ग्रोङहरु आफूलाई *गुरुङ* छुट्टै तामाङभन्दा उचो जातिको ठान्दछन् । धर्म संस्कृतिहरु पनि धेरै जसो हिन्दूहरुको ग्रहण गरिसकेका छन् । भाषा पनि मिजासिलो र मिठास पूर्ण खस नेपाली बोल्दछन् । लेखक स्वयंको गाउँमा यो वाओी(उपनाम) प्रथा र ग्रोङ वा रोङले गुरुङ/तमुहरुलाई बुझाउँने कुरा एउटा जिज्ञासाको रुपमा रहेको थियो । पछि खोजी रअध्ययनको क्रममा जब सिक्किम गान्तोक पुग्दा, त्यहाँ कुमार योन्जन ज्योज्योको निजी पुस्तकालयमा रहेको एउटा "किरात इतिहास र संस्कृति" पुस्तक पढ्ने अवसर प्राप्त भयो । त्यसपछि वर्षौं अघिदेखिको जिज्ञासाको प्रतिउत्तर स्वयं गुरुङ कै वंशावलीमा भएको कुरा भेटियो र उक्त पुस्तकमा छापिएको "शेरबहादुर गुरुङ संस्करण" भनिएको त्यो गुरुङ वंशावलीले तामाङ जातिमा भएको उपरोक्त उपनाम वा उपथरले कालान्तरमा छुट्टै जातको जन्म भएको कुरालाई पुष्टि गरेको छ । पहिले मैले प्रदिप थापा मगरसंग चिया गफमा यो कुरा छुस्स चुहाएको थिएँ । उहाँले आफ्नो पुस्तक 'कोहुन जात फेर्नेहरु'मा लेख्नु भएको छ ।[23]

तामाङ जातिमा भएको उपनाम प्रथा ग्रोङ वा रोङ (GRONG or RONG) बाट GRUNG गुरुङ भइसकेपछि प्रसिद्ध वर्गको दर्जा पाएकाले र तामाङहरुलाई लामा

भोटे भनेर गिल्ला गर्ने, लाजले गुरुङ वा लामा लेख्न थालेका हुन्। तामाङहरुको ग्ले वा राजवंश नै त्यहाँ ग्ले(घले) भएको र लमजुङ पनि कुनै तामाङ ग्ले कै जोड राजधानी वा प्रशासनिक केन्द्र "लामजोङ" रहेका थिए। सेमजोङको दाकुर राजाका कान्छा छोरा कुन्दो स्हाङबो (कान्छा राजकुमार) ह्यापेङको सल्यानीहरुसंगको छलकपट पूर्ण युद्धबाट ( यो प्रसंग बाअीबा पृ ७३-७६मा पनि हेर्नुहोस्) हारेपछि आरुघाट तरि लमजुङको पाअीकुपैकुमा पुगे। उनले त्यँही नै आफ्नो राज्य स्थापना गर्न सफल भएका थिए। त्यहाँ कुन्दोस्हाङबोलाई 'चाअीम्हीकी र नाअीसीङ ग्ले(घले)को नामले पुकारिन्थ्यो। उनको चार भाई ग्लेजाहरु जेठा तामा ग्रोङ, महिला चामा ग्रोङ, साअींला कुले ग्रोङ र कान्छा तुले ग्रोङ थिए। पाअीकुका बासिन्दाले कुन्दो स्हाङबोका चारभाई छोराहरुलाई 'तमु' (तामाङ मु )य्रीनीहरु तामाङको सन्तान थिए भनेर चिनाउन 'तमु' भन्न थाले भनिन्छ। आज त्यहि अनरुप गुरुङहरुमा चार जात पनि पाइन्छ। अनि तामाङ ग्लेले (घले/राजाले) राज गरेको थियो, किन भने लमजुङमा अझै कयौं गाउँहरुमा तामाङहरुको घना बस्ती छ। कयौंले तामाङबाट गुरुङ भएको आजभोलि गौरवका साथ स्वीकारेका छन् र आफूलाई तामाङमा बदलेको तथ्य हालको गोर्खा, तनहुँ, लमजुङमा प्रशस्तै पाइन्छ। केही तामाङहरुले ब्रिटिस र भारतीय सेनामा भर्ना हुन आफ्नो नामको पछाडी गुरुङ लेखेका छन्। नेपाल तामाङ घेदुङले भारतीय रक्षा मन्त्रालय, नेपालको प्रधानमन्त्री लगायत विभिन्न निकायहरुमा अन्जानमा जागिर पाउँन गुरुङ लेखे पनि आफ्नो जाति तामाङ भएकोले तामाङनै लेख्न पाउँ भनि पत्राचार गरेर जावाफ प्राप्तगरे पश्चात पून *तामाङ* लेखाउन थालेका छन्।



---

23 *ईमान सि चेमजोङ- "किरात इतिहास र संस्कृति"को नेपालीमा अनुवादक शेरबहादुर इङनाम पपो लिम्बू -२०५१)मा पश्चिम नेपालका किरात राजाहरुको उपलब्धि, अध्याय-४ अन्तरगत पाना नं. १३२ र १३३ मा गुरुङ जातिको यसरी दुई जाति वर्गिकरण गरेर दिएको छ।*

..."ल्हिग्यी जाति:-घले बाइ परिवारमा विभक्त छन्। घण्डे तेत्तीस परिवारमा विभक्त छन्। लामा तेइस परिवारमा र लामिछाने चालीस परिवारमा विभक्त छन्। कुग्यी जाति :-कुग्यी जातिको गुरुङ एकसय परिवारमा विभक्त छन्। रिल्ली, रिल्टेन, जेर्लेन, सामारी, समुन्देर, कियलदुङ, खाजी र पार्जा वर्ग चाहिं घले जातिमा प्रसिद्ध छन्। तिनीहरुको आफ्नै बंशावली छ।

"एदुङ ग्रोङ, चेबिरोङ, चोम रोङ, घोल रोङ, होज रोङ, कालि रोङ, केलोन रोङ, कोन ग्रोङ, कुदला रोङ, लो रोङ, माजु रोङ, मेजी रोङ, ल्मुग रोङ, नाजी रोङ, पाचो रोङ, पोचकी रोङ, रिजो रोङ, सिनगो रोङ, टाग रोङ, थाकु रोङ, तेन ग्रोङ, वर्ग पनि गुरोङ वा गुरुङ जातिका प्रसिद्ध वर्ग हो।

पाच्यु लामा, टङगी लामा, पुनजी लामा, कुरुङगी लामा, ध्याप्रीङ लामा पनि गुरुङको लामा वर्गमा प्रसिद्ध छन्। तर ध्यप्रीङ लामा सामान्यतया गुरुङको प्रमुख लामा हो। पच्यु लामा चाहिं घलेहरुको प्रमुख पुरोहित हो। जसले तिब्बते लामा धर्मको अनुसरण गर्दछ लेम र प्लोनेका बंशज जो लामिछाने गुरुङ नामले प्रसिद्ध छन्। ती आदि।..........."

## ༥་ མུར་མི་ གྱི་ མུལ་མི་ **मुर्मी वा मुल्मी**

**(MURMI OR MULMI/PEOPLE OF THE BORDER LAND/THE FRONTIER)**

तामाङ जाति र तामाङ भाषालाई बुझाउन १८ औं शताब्दीको आरम्भदेखि १९ औं शताब्दीको मध्यसम्म मुर्मी शब्द तत्कालीन अन्वेषक, लेखक, इतिहासकार हरुले प्रयोग गरेको पाइन्छ। तामाङ जातिको इतिहास उत्पत्ति बारेमा जान्न यो शब्दको अर्थ जानी राख्नु उचित ठानी त्यसको अर्थबारे चर्चा गरिएको छ।

यो मुर्मी संज्ञावाचक शब्दलाई ह्यामील्टनले १८०२-३, हडसनले सन १८४७, तिर, त्यसैगरी जर्ज ग्रीयर्सन्ले १९५९, ट्रायर १९७२, म्याकडोनाल्ड १९८९ तिर आफ्नो अन्वेषणमा तामाङ जातिलाई बुझाउँन मुमी उल्लेख गरेका छन्।[24] यो मुर्मी शब्दको अर्थ सिमानाको छेउछाउ बस्ने जाति भनेर अडकल काटिएको पाइन्छ। कसरी *मुर्मी* रहन गयो भन्ने सन्दर्भमा खर्साङ निवासी विद्वान जस योन्जन प्यासीका अनुसार तत्कालीन समयमा अन्वेषकहरुलाई भाषिक समस्याले गर्दा अन्यजातिले तामाङ जातिलाई बुझाउने जातीय नाम उनिहरुले प्रयोग गरेको हुन सक्छ भन्ने भनाइ राख्नुहुन्छ।

यसलाई स्व.इमानसिं चेमजोङको नेपाल राजकीय प्रज्ञा प्रतिष्ठानद्वारा प्रकाशित लेप्चा भाषाको शब्दकोशमा *मुर्मी* शब्दको अर्थ *"मुर्मी = तामाङ"* उल्लेख गरि

[24] तामाङ जाति-पेज नं २८ र २९ हेर्नुहोस्।

एकोबाट पुष्टि हुन्छ । तामाङ जाति बुझाउने यो लेप्चाभाषाको अर्थले एउटा सम्प्रदायले अर्को सम्प्रदायलाई बुझाउँन मुमीको प्रयोग भएको किटान गर्नु हुने सिलगुढीका एस.एन.डि.लामाका तर्कलाई पनि पुष्टी गरेको छ ।[25] तसर्थ मेरो विचार मा १७ औं शताब्दीको उत्तरार्द्धमा र १८ औं शताब्दीको अन्तदेखि १९ औं शताब्दीको अन्तसम्मको नेपालको अवस्था विदेशी अन्वेषकहरुको लागि पनि विषम थियो । किन भने एकातिर नेपालका तत्कालीन अवस्था भनेको युद्ध नै युद्धको अवस्था हो । पृथ्वीनारायणको राज्यविस्तार युद्ध चलिरहेकै थियो । त्यो बेलाका शोधकर्ताहरुको तामाङ स्रोत पूर्वतिर नै आधारित छ, खास गरिकन नेपालको सीमा बाहिर तामाङ जातिका सोधकर्ताहरु दार्जीलीङमा केन्द्रित थिए । उनीहरुले त्यतैको लेप्चा भाषाको तामाङ जातिलाई बुझाउँने शब्द मुर्मी प्रयोग गरेको अनुमान गर्न सकिन्छ, किनभने त्यतातिर पनि नेपाल र दार्जीलीङको सिमानामै प्रशस्त तामाङहरु भएकाले PEOPLE OF THE FRONTIER/PEOPLE OF BORDER LAND को संज्ञा दिए । म्याकडोनाल्डले पनि यहि संकेत गरेका छन ।[26]

त्यसैगरी ग्रीयर्सनले दार्जीलिङमा रहेका मुर्मीहरुको (तामाङको जनसंख्या बुझाउँन) जनसंख्यासन १९५७ मा ४९,८९० उल्लेख गरेका छन ।[27] त्यसैगरी ग्यजिटिएर अफ सिक्किममा-१८९४, १९८९ एच एच रिस्लेले राजा थुतोप नाम्ग्यालको पालामा लिइएको सिक्किमको जनगणनामा मुर्मीहरु(तामाङहरु) पुरुष ८०१, महिला ७७८ र बच्चाहरु १२८८ जना भएको तथ्यांक दिएको छ । तसर्थ यो तथ्यांकहरुले त्यो बेला विदेशी भाषामा त के खस नेपाली भाषामा बताउन सक्ने तामाङ नै नभएको अनुमान लगाउन सकिन्छ यदी भएपनि त्योसंख्या एकाध व्यक्तिहरुमा

---

[25] *एस.एन.डि.लामाले सिक्किमबाट प्रकाशित ज्योज्यो-वर्ष-२, अंक-२ को पृष्ट १५-१७ मा यसरी उल्लेख गर्नु भएको छ*..."न त आजसम्म कतै कुनै तामाङले आफूलाई मुर्मी भनेर परिचय नै दिएका छन् । यथार्थमा मुर्मी शब्दको कुनै ठोस आधार थिएन त्यो त केवल कुनै खाम इलाकामा बसोवास गर्ने भित्र भाषि सम्प्रदायले अर्को सम्प्रदायलाई चिन्हारीको रुपमा प्रयोग गरेको शब्दमात्रै हो । विशौं शताब्दीको शुरुवातमा नेपाल अधिराज्यको पूर्वी खण्ड (पहिलेका लिम्बूवान र खम्बुवानको किरात प्रदेश अनि त्यसका संलग्न इलाका) का वासिन्दाले तामाङलाई मुर्मी भन्ने गर्थे औ भन्ने कुराको वर्णन पुरानो अभिलेखहरुमा पाइन्छ ।..."

[26] " where does the name Tamang come from ? in English, it is written Tamang or Tamang. On the other hand, the word Murmi is used designate the same Ethinic group in certain English sources which rely often on information collected in East, in particular, at Darjeeling, outside political Nepal. In fact, Murmi is perhaps a Tibetan terms which designate the "people of frontier"(mur, "at the frontier" + mi, "man").... *Alexander Macdonald -Eassy on the Ethonology of Nepal and South Asia-1975, Ratnapustak Bhandar Kathamndu,*

[27] तामाङ जाति-२०५१ पृ.३५ हेर्नुहोस्

सिमित हुसक्छ। जान्ने बताउन सक्ने वाहुन तथा नेवारहरु त्यो समयमा तामाङलाई खिसी गरेर 'लामाभोटे' वाहेक अन्य भन्न रुचाउदैनथे र नेपालमा हामी भोटे होइनौ भनेर भन्न वा कुरा उठाउँन सरकारमा जाहेर गर्नु पर्थ्यो जुनकार्य त्यो समयमा बिर लोको घाँटीमा घण्टी भुण्ड्याउँने कथा बराबर थियो। मानवशास्त्री, भाषाशास्त्रीहरु भारत स्थित कोलकाता तथा सिक्किम भएर आउँने बढी भएकाले उनीहरुलाई वास्तविक लामाभोटे वा तिब्बती जातिसंग राम्रो परिचय थियो। तामाङ जातिको संस्कार, संस्कृति अधिकत्तर भिन्न र मौलिक देखे र त्यतातिर तामाङलाई 'लामाभोटे' पनि भनिदैनथ्यो। जसलेगर्दा त्यहाँको अन्य जातिको भाषामा अर्थात सिक्किमका आदिवासी जाति रोङ लेप्चाको भाषामा तामाङ जातिलाई बुझाउँने शब्द *मुर्मी* प्रयोग गरेको हुनसक्छ। नेपालको सरकारी कागज पत्रहरुमा सन् १८४१(बुङताङ डक-१९९४) तामाङ मिझारहरु (जिम्मुवाल/मुखिया खुवा तथा किपटको तामाङ तालुकदार) लाई 'लामाभोटे' भनेर लेखेको छ। जब कि म्याक्डोनाल्डले सन १८०२-३ अर्थात वि.सं. १८५९-६० तिर मात्र तामाङलाई बुझाउँन आफ्नो प्रकाशनमा मुर्मी भनेर.लेखेका छन्। यसले पनि तामाङ जातिलाई नेपाल बाहिर त्यो बेला तामाङलाई लामा भोटे नभनेको पुष्टि हुन्छ। यसरी धेरै स्थानहरुमा धेरैकालसम्म तामाङलाई बुझाउन मुर्मी शब्दको प्रयोग भएको पाइन्छ।

मुर्मी शब्दको तामाङ भाषामै अर्थ लागाउने हो भने- 'मु वा मुर' भनेको मुहान अथवा मुल वा आरम्भको भन्ने बुझाउँछ। 'मी' भन्नाले त सिधै मानवजाति मान्छेलाई बुझाउँछ। मुर्मी वा मुमीले तामाङ भाषामा पनि सबभन्दा पहिले आवादि बसाल्ने मूल जाति FIRST SETTLER OR EARLY SETTLER अथवा भूमिपुत्र वा आदिवासी भन्ने बुझाउँछ। सिक्किमका लेप्चाहरु त्याहाँका आदिवासी भएकोले उनीहरुले आफूजस्तै नेपाल तर्फका आदिवासी तामाङहरुलाई मुर्मी भनेर आफ्नो भाषामा बुझदछन्।

तामाङ जातिको प्राचीन सांगठानिक गणमा "मुल्मी" एक प्रतिष्ठित मान्यगणको सदस्य वा मुख्य व्यक्तिको स्थान वा दर्जा हो भने तामाङ जाति निकटको अर्को जाति नेवारको एक थर पनि मुल्मी भएकोले अन्वेषकहरुले नेवारको त्यो थर तामाङ मुर्मीहरु, नेवार जातिभित्र अन्यजातिहरुले नेवार भाषा संस्कृति अपनापछि नेवार जाति भए जस्तै मुल्मी लेख्ने गरेको अनुमान गर्दछन्। किनभने नेवार भित्र त्यस्ता थुप्रै थरका नेवारहरु विभिन्न जातिहरुबाट आएको पाइन्छ।

# ८ गाके कानी ( प्रवेशद्वार/प्रस्थानद्वार)

# (GATE, DOOR OF ENTRY OR ADMISSION & OUT)

गाउँ, बस्ती, शहर वा भुरे टाकुरे राज्यलाई चारैतिरबाट पर्खालले घेरी पस्न वा निस्कने ढोका बनाएको हुन्छ, त्यस ढोकालाई तामाङ भाषामा कानी वा ग्युल माने भनिन्छ। यस्तो गाउँ, बस्ती वा राज्यलाई पर्खालले घेर्ने र कानी(ढोका) बनाउँने परम्परा चीनका पुरानो राज्यहरुमा पनि पाइन्छ।

प्राचीन तामाङ राज्य, र गाउँबस्तीहरुमा प्रवेश स्थानमा एउटा प्रवेशद्वार अनिवार्य बनाएको हुन्छ जसलाई 'कानी' भनिन्छ। राज्य तथा बस्तीमा प्रवेश नाकाको रुपमा पनि कानीलाई लिएको हुन्छ। प्रायः कानी(ढोका) सानो पाटीघर जस्तोनै बनाएको हुन्छ। सो कानीको भित्तामा रक्षा गर्ने देवी देवताहरुको मूर्तिहरु कुँदिएको हुन्छ। आजभोलिको कानीहरुमा बौद्ध धर्म अनुसारको थाङ्का चित्रहरु कुँदिएको हुन्छ।[28]

यही कानीलाई कतै कतै ग्युलमान पनि भन्ने गरिन्छ। नुवाकोट जिल्लाको ककनी भन्ने स्थान जहाँ रुम्बा थरका तामाङ राजाले राज्य गरेको मौखिक इतिहास पाइन्छ। (ककनीबारे पछि बढी चर्चा गरिने छ) त्यो ठाउँको नाम रसुवा जिल्लाका तामाङहरुको प्राचीन गीत अनुसार कारकानी*बाट* काकानी र अनि ककनी भएको बुझिन्छ। यस्तै सिन्धुपलान्चोकको ह्रीस्यांगु, धादिङ जिल्लाको जारनाङ, सेर्तुङ, बोराङ, नुवाकोटको बोमताङ, रसुवाका स्याफ्रु, गोल्जोङ आदि विशुद्ध तामाङ गाउँबस्तीहरुमा कानी वा ग्युलमानेहरु रहेका छन्। ग्युलमान भनेको *छ्योर्तेन वा चैत्य* सहितको छिर्ने ढोका हो।



---

28 **.." A few hour later we reached risingo, the most important Tamang village of the area and the home of several learned Tamang Lamas. Past a mani wall,bearing long row of tablets with Tibetan inscriptions, we came to free standing gate, also called KANI, the interior of which was painted with religious fresoces…."** यो अंश **Von furer Haimendorf-Exploratory Travels in High land Nepal.-1989** (उललेखित दार्जीलिङबाट प्रकाशित हुने द्वैमासिक पत्रिका "बोधि भावना" वर्ष-१ अंक-२ पृ.११ बाट लेखक हरिशचन्द्रलाल सिंहको 'ओरिजन अफ तामाङ')

# ३ ད་མང་ལ་ ཧྲུང་ས་ བཔ་ས་ तामाङ जातिको उद्गम्

## THE ORIGIN OF TAMANG

तामाङ जाति नेपालको सबै भन्दा पुरानो जाति हो । 'तामाङ ऐतिहासिक कालको विषयमा कुनै ठोस प्रमाण नपाइकोले भोटे जाति(तामाङ) कहिलेदेखि नेपालमा बस्दै आए मिति ठोकुवा गर्नु भने गाह्रो छ, तर भोटे जाति नेपालको आदिवासी हुन् भन्न चाहीं प्रमाणको कुनै अनिकाल छैन्' *(सिताराम तामाङ-थुन्डेल-२०३३)*। तामाङ जातिको उत्पति तथा तामाङहरुको आगमन सम्बन्धमा हालसम्म विभिन्न विद्वानहरुले गरेको ऐतिहासिक विश्लेषण तथा तामाङ जातिले ओगटि राखेको भूभागहरु र सभ्यतासम्म कहाँदेखि र कहाँ कसरी फैलिदै आए भन्ने सन्दर्भ उपलब्ध मौखिक, लिखित वंशावलीहरु, भौगोलिक क्षेत्रादिको अध्ययन तथा विश्लेषणको आधारमा उद्गम स्थलबारे निम्न अनुसार संक्षिप्तमा वर्गीकरण र चर्चा गरिएको छ ।

(१) पाषाण युग वा ३० हजार वर्ष पहिले, (५) जडान वा जड्यान वा जाड क्षेत्र

(५) बुढी गण्डकी र त्रिशूली नदी बीचको भूभाग, (८) तामाङ वंशावली अनुसार ।

༡་ ཡུང་བ་ སེ་ཇེ་ལ་ དཡུང་

# पाषाण युग वा इ.पू. ३० हजार वर्ष पहिले
## ( PRE HISTORIC STONE AGE)

तामाङ जातिको उत्पत्ति र उद्गम् इतिहास केलाउँदा आज भन्दा २५ वर्ष अगाडि रसियन प्रागऐतिहासिक पुरातत्वविद डा. एनातोली याकोब्लभ शेटेन्कोको योगदानलाई महत्वपूर्ण मानिन्छ। डा. शेटेन्कोको नेतृत्वमा भएको (१५ जनवरीदेखि २४ मार्चसम्म-१९७८ मा) खोजी तथा उत्खननबाट प्राप्त पाषाण हतियारको तुलनात्मक अध्ययन विश्लेषणले इ.पूर्व उत्तरकाल ३०,००० वर्ष अगाडि नै मंगोलहरु मंगोलियाको गोवीबाट चीन, तिब्बत हुदै हिमालयको काख काठमाण्डौको उत्तरतर्फ आबादी बसाल्ने आदिम मंगोल मूलका मानव जाति तामाङहरु नै हुन भनि अनुमान गरेका छन्।[29] यथार्थमा पनि तामाङहरुको काठमाण्डौ उपत्यकाको चारै तिर घना आबादी रहेको छ। उपरोक्त तथ्य बाहेक तामाङहरु यत्ति नै बेला यो क्षेत्रमा आएको थिए भन्नेबारे नेपालको लिखित इतिहासले केही बताउन सकेको छैन। तसर्थ यो भूभागको प्रमुख आदिम जाति मूलवासी, आदिवासी तामाङ मंगोलहरु नै हुन भन्ने कुरा उत्खननबाट प्राप्त प्राचीन मध्य पाषण युगका सामाग्रीहरुले प्रमाणित गरेका छन्।

उपरोक्त कुरालाई मंगोल वंशी महाचीनबाट काठमाण्डौ उपत्यका आउनुभएका बोधिसत्व महामञ्जुश्री र उहाँका शिष्यहरुले उपत्यकाको सरोवरको पानी आफ्नो

---

[29] हेर्नुहोस् : जनकलाल शर्मा,माघ, प्रज्ञा- नेपाल राजकिय प्रज्ञा प्रतिष्ठान २०३८।, जनक लाल शर्मा- हाम्रो समाज एक अध्यन, साझा प्रकासन२०३९, नेपाल ऐ ऐ उदृढ , परशुराम तामाङ, तामाङ जाति-वि.स.२०५१, पृ २२-२३, ऐ ऐ उदृढ प्रताप बल तामाङ, तामाङ थर खोज चर्चा-मार्च १९९४,

प्रज्ञादण्ड राल्डी (खड्ग) द्वारा काटेर सरोवर(पोखरी) सुकाएर बस्ती बसालेको वंशावलीको कथनले पनि प्रथम आवाद गर्ने जाति मंगोल नै हुन, भन्ने दर्शाएको छ। यस कुरालाई इतिहासकारहरुको स्वीकारोक्तिले पुष्टि मिल्दछ ।[30]

मञ्जुश्रीको यो अनुकम्पा प्रति श्रद्धा, भक्ति र विश्वासको प्रतीक तामाङहरुले संसार र बस्तीको रक्षार्थ प्रज्ञादण्ड राल्डी आफ्नो घरमा गाड्ने लुङदरको टुप्पोमा राख्ने गरि आएबाट पनि उपत्यकामा पहिलो बस्ती बसाल्ने मंगोल तामाङहरुनै थिए भन्ने विश्वास गर्न सकिन्छ ।

त्यसैले उनीहरुले उपत्यकालाई आफ्नै भाषामा याम्बु नाम राख्यो । त्यतिमात्र नभएर उपत्यकाको बस्तीहरुको नाम तामाङहरुले नै भक्तपुरलाई खोपोड, ललितपुर (पाटन)लाई हेराङ(योलोङ) अनि काठमाडौंलाई याम्बु नाम राखे कै नामबाट नेवार हरुले क्रमस: यें (काठमाडौं), खोप वा खोप(भक्तपुर), अनि यल(ललितपुर) राखेका हुन् ।

त्यसैले यही रमणीय हिमालय पहाडी यो भूभागमा इ.पू. को मध्य पाषण युगमा नै मंगोलीयाको गोवीबाट तिब्बत तथा हिमालय हुँदै वर्तमान भूभागसम्म आबादी बसाउने तामाङहरु नै हुन । अन्वेषक जर्जग्रीयर्सन महोदयले त्यसै भएर होला 'तामाङहरुलाई नेपालको सबभन्दा पुरानो बासिन्दा मध्ये एक मानेका छन् ।[31] तसर्थ तामाङ जातिको उद्‌गम या उत्पत्ति पाषाण युगमानै काठमाण्डौ उपत्यकामा भएको संकेतलाई पुष्टि गरेको छ । त्यसैले काठमाण्डौ उपत्यकाको प्रथम मानव आबाद गर्ने तामाङहरु नै थिए ।



30. "यसमा सन्देह छैन कि नेपाल उपत्यकाका आदिम जाति हिमालपारिका मंगोल नै थिए । यो तथ्य मंञ्जुश्रीको उपर्युक्त आख्यानसित ठिक मिल्न जान्छ ।" बाल चन्द्र शर्मा - नेपालको ऐतिहासिक रुप रेखा -२०३३ पृष्ठ-५७

31 जनकलाल शर्मा हाम्रो समाज एक अध्ययन-२०३९- पृ.

## ༣་ ཇ་ཏན་ जडान वा जड्यान वा जाड वा जाडे प्रदेश
## (JADAN/PAN HIMALAYAN REGION)

उजाड, हिमाली उपत्यकाको नजिकको बस्ती, जाडोमा बस्ने, बाक्लो उनी बख्खु, दोजा, स्योदे(टोप), केतेन, स्योल्दो लुगा लगाउने (जाँडखाने परम्परा भएको) जातिलाई जाडे भन्ने गरेको पाइएको छ। हुम्ली जुम्ली भाषामा हिमालय उपत्यका वा बसोवास उपयुक्त हिमाली प्रदेशलाई जडान(जडह) भनिन्छ ।

"जडान समाजको लम्जुङपछिको हालसम्म जानकारीमा आएको मुस्ताङ राज्य यद्यपि छँदैछ। साथै सोलुका शेर्पालाई पाल राज्य सरहको हक्डग् र पूर्व पल्लो किरात ताप्लेजुङको पूर्वउत्तरी भेगको बलुङ्ग यांमा, घुन्सा, थुलुङ्ग र लेलेप लगायतका काठमाण्डौ उपत्यका भन्दा दोब्बर ठूलो क्षेत्र हालको कन्चनजंघा पार्क क्षेत्र लगायत ५ गाँउको एक सानो रकम 'सिर्तु' वापत श्री ५ लाई सलामी चढाई पञ्खत बाहेकका मुद्दा मामिला, कार्वाही, विचारी र न्यायीक पदका पदीय अधिकारीको सहयोगमा भूमि सुधार ऐन २०२१ लागू नभएसम्म अन्य पश्चिमको भुरे-टाकुरे राज्यकै रुपमा पूर्वको एक किपटिया अमाली सरह गोवा दोर्जे नाम्गेलसम्मले सो गोवांगीको सुविधा उपभोग गरिआएको पाइन्छ (डा.र.ब.था.सुयल)।"[32]

तामाङ जातिलाई नेपालमा जाड जाति भनेर चिनिन्छ।[33] हालको हुम्ला, जुम्ला तथा डोल्पा जिल्ला तामाङ जातिको बसोवास रहेको कुरा (मेचिदेखि महाकालीसम्म पुस्तकको भाग-२)उल्लेख गरेका छन्। जडान प्रदेशका तामाङहरुलाई हुम्ली तामाङ भनिन्छ।[34]

---

[32] *डा.रणबहादुर थापा 'सुयल'* -हाम्रो हिमाली जडान सम्पदा" ..."हिमाली रुख पात विहीन समिपको स्थान तथा समिपको स्थान र त्यास्तो स्थानमा बसेको सामाजिक वातावरण भएको स्थानलाई परम्परागत जडान सम्पदाको नामले सम्बोधन गरिन्छ। प्राचीनकालीन नेपालका भरेभुरे टाकुरे राज्यमध्ये एक जडान सम्पदा मध्येकैएक घले समाजको आजको २८३८ वर्ष पूर्व नेपाल राज्य लम्जङ र गोर्खामा पनि थियो। सोही वंशले इसापूर्वमा खसघर मा छँदाकाआफना पूर्वजका गुरखान वा महाराजका वंशजका सन्ततीलाई भिरकोटबाट यशोबर्मा शाहले नक्साइ ल्याई लमजुङको राजामा चयन गरिएको थियो।"..हाम्रो सम्पदा राष्ट्रिय मासिक, पृ. १-५वर्ष-२ अंक-४, जेठ-२०५९

[33] Parman Singh Moktan,B.S. 2053, YARKANT TO JHARKHAND an Identification of Jad Clan, KOKO-MHEN-DO PUBLICATION,TUSAL BAUDA, KTM. NEPAL

[34] हुम्ली तामाङ :- नेपाल अधिराज्यको उत्तर-पश्चिम स्थित हुम्ला जिल्ला र छेउछाउका एक थरी तिब्बत बर्मेली भाषा समूहका तथा मंगोलियन आकृति र भोटे भेषभुषा भएका मानिस बसोबास गरेका छन्। जस्लाई हुम्ली तामाङ नामाकरण गरिएको छ।...हुम्ली तामाङका कतिपय विशेषताहरुमध्ये महिलाहरुले सामुदायिक अधिकार प्राप्त गरेका तथा उनीहरुको आर्थिक उपादेयता फलस्वरुप परिवारको सम्पत्तिमा महिलाहरुकै बढी सामित्व रहेका हुनु हो। साभार -नेपाली जनजीवन-खरम्हेन्दो-२०४८ वर्ष-१ अंक-२ पृ.-१२

त्यसैगरी नेपालमा तामाङ सन्तानकै पहिलो सहायक मन्त्री हुने सौभाग्य पाउनु हुने तिलक बहादुर नेगीका अनुसार "गोर्खा राज्यको विस्तार हुनु अगाडी जडान, खसान, किरात थियो । त्यहाँ भित्र तामाङ वा जाडेको जडान, मगरको मगरात, लिम्बूको लिम्बुवान, खम्बुको खम्बुवान थियो । अन्य जातिले तामाङ जाडे भनेर पनि भन्ने गर्दथे । तिब्बतको 'म्हार युल' हुँदै वर्तमान नेपालको सुदूर पश्चिमको उत्तर पश्चिम काश्मिर छेउ हुँदै मानसरोवर भएर वर्तमान कर्णली अञ्चल हुँदै अहिलेको तामाङ बाहुल क्षेत्रसम्म फैलिएका हुन ।"

कर्णाली अञ्चलको मुगु हाल पनि जडान कै केन्द्रमा पर्दछ। उहाँले लेख्नु भएको छ "११ औं शताब्दीमा सिंजाधिपति खस शासकहरुले जडानबाट धपाइएपछि तामाङहरुले *'म्हार युलसे क्यात्छी, न मे ल्हामा सात्छी'* भनेर दुःखित हुन्छन् । अर्थात यही भनाइको अप्रभंश रुप नेपालीको प्रसिद्ध उखान 'ल्हासामा सुन छ, मेरो कान बुच्चै' बन्न गएको हो । यसले दर्शाउन खोजेको मुख्य अर्थ हाम्रो कान काटियो, स्वर्णमय् भूमिले सराप्छ भनेको हो । यस कथनको गहन अध्ययनले यिनीहरु मंगोलिया, चीन, मानसरोवरको उत्तर, ल्हासा आदि स्वर्ण भूमिबाट आएको सभ्यता भन्ने बुझाउँछ । नेगीले त्यसैगरी 'ज्याङछ्यो उर्गेन युल सांग्तो पाल्की ग्यल्सा' पेशावर औडियाना उत्तर दिशाको ताम्र भूवन प्रतिपालित भएर वर्तमान नेपालको पूर्वतिर सिन्धुपाल्चोक, तेमाल, तमाल हुँदै दोलाखा, रामेछाप, सिन्धुलीसम्म पुगेको कुरा ताम्र पत्रमा लेखिएको छ" भनेर उल्लेख गर्नु भएको छ ।[35] नेगीको उपर्युक्त भनाईलाई नेपाल तामाङ घेदुङका संरक्षक एवं अखिल भारतीय तामाङ बौद्ध संघका पनि संरक्षक रहि सक्नु भएको स्व. परमान सिं मोक्तानज्यूको *"यारकन्तदेखि झारखण्डसम्म, जाङजातिको पहिचान"* भन्ने ३०० पृष्ठ भएको ग्रन्थले अझ पुष्टि गर्दछ । यो ग्रन्थ र यसभित्र संग्रह गरिएको टिप्पणी तथा सूचनाहरुले पनि मगरको मगरात, लिम्बुको लिम्बुवान जस्तै *तामाङहरुका जडान हो भन्ने स्पष्ट पारेको छ*। उहाँका अनुसार तामाङहरु मध्ये एसियाको जाङ जाति हो । त्यसरीनै तामाङहरुको मुख्य भूमि जडान भएको कुरामा तामाङ विद्वान लेखक परशुराम तामाङ पनि सहमत हुनुहुन्छ ।[36] तसर्थ उपरोक्त *जडान प्रदेश* नै तामाङ जातिको सभ्यताको विकास तथा प्रथम उद्गम स्थल हो भन्ने सहजै अनुमान लगाउन सकिन्छ ।

☯

---

35 तामाङ, तिलक बहादुर नेगी,'तामाङ जातिको उत्पत्ति इतिहास' तामाङ भाषा तथा संस्कृति विकास समिति- बुलेटिन-१, वि.स.२०४० ऐ ए पुर्नर मुद्रित छार म्हेन्दो वर्ष-२, अंक-११/१२, नेपाल तामाङ घेदुङ,

36 "Tamangs Settlements are found all over the Kingdom of Nepal and north-eastern hills of India. However, their main land are the Jdan, the upper part of Karnali region of todays western Nepal and the surroundings ares of Kathmandu Valley." Parshuram Tamang 'Historical Premises for the Under-development of Tamang Nationality' – I, THE TAMANGS: A FACE OF NEPAL –Page. 15

༣་ བུ་དྷི་གན་ཌ་ཀི་ ཐེན་ ཏྲི་ཤུ་ལི་ གན་དི་ གུང་ལ་ས

# बुढी गण्डकी र त्रिशूली नदी बीचको भूभाग

## (BETWEEN BUDDHI GANDAKI AND TRISULI GANGGA)

तामाङ जातिको वास्र्तविक पहिचान दिने जीवीत र प्राचीन यथार्थको खोजी गर्न बुढी गण्डकी र त्रिशूली बीचको भूभाग उर्वर मानिन्छ।

भोटको माङ युल सीमाना उत्तरमा लाह्री, लाप्साङ कार्पो(गणेश हिमाल), बपील, लाङटाङ, लाराङलुरुङ आदि हिमालय श्रृंखलाहरु, पश्चिममा बुढी गण्डकी, पूर्व त्रिशूली गंगा र यी गंगाहरुको दोभानदेखि उत्तरको क्षेत्रमा तामाङ जातिको मौलिक वेशभूषाहरु सम्पूर्ण तामाङ क्षेत्रमा पाइने प्रकारका पाइन्छ र अन्यत्र नभएको मौलिक पहिरनहरु पनि पाइन्छ ।

अनि भाषागत रुपमा यहाँको तामाङ भाषाको मौलिक शब्दभण्डार अन्यत्रको भन्दा विशाल छ । यो क्षेत्रका तामाङहरुको संस्कार, परम्पराहरु अधिकत्तर एकै खालको छ ।

नेगीले भन्नु भए जस्तै जडानको केन्द्रबाट लखेटिएपछि पूर्वसर्दै जाने क्रममा सामरिक र आर्थिक दृष्टिकोणले उपयुक्त यस भूभागमा तामाङहरुले अखडा जमाएको अनुमान गर्न सकिन्छ । कि त जडानमा तामाङ आधिपत्य छँदै त्यस भूभागसम्म

तामाङहरु फैलिसकेको हुनु पर्दछ । किन भने तामाङ जातिको *'वंशावली' तथा 'ताम्बा काश्रीतेन, जीक्तेन ताम छ्योओ, ड्डुओछेन् च्योप्पो'* आदि ग्रन्थमा विभिन्न थरहरुको ठुङसा र बाब्साको वर्णनमा मोक्तानलाई 'मुगु ग्याल्साला' भनिएको छ । त्यस्तै पाखीनको 'पुराङ च्यारी' भनिएका स्थानहरु त्यतैपट्टी पर्दछ ।

यो भूभागको बारेमा विदेशी विद्वानहरुले लेखेको कुरालाई सिताराम तामाङज्यूले उहाँको "तामाङ जातिको उद्‌गम् इतिहास र राष्ट्रियतावारे" पुस्तकको पाना नं. ९ मा, परशुराम तामाङको "तामाङ जाति" पुस्तकको पाना नं.२१ मा विस्तृत रुपमा उल्लेख गर्नु भएको छ ।

त्यस्तै पुराङ भनेको मुस्ताङ हो । मुस्ताङको गुन्थाङ राज्य पुराङकै एक भाग भित्र पर्दछ । यस सम्बन्धमा मिति २०५३ आसोज २७ देखि २९ गतेसम्म ललितपुर दरवार स्क्वारमा भएको *"तामाङ इतिहास गोष्ठि"*मा अष्ट्रियाका डा. गाब्रीयला ट्राउस्चर र परशुराम तामाङद्वारा संयुक्त रुपमा प्रस्तुत कार्यपत्रमा यसो भनिएको छ "*तामाङ* जातिवाचक नामको सबभन्दा पुरानो लिखित अभिलेख गुन्थाङका राजाको वंशावली १३ औं शताब्दीको वृतान्तमा पाइएको छ । जहाँका मानिसलाई सेरीब Serib (७औं देखि १४ औं शताब्दीसम्म) अधिराज्यको तामाङ भनिएको छ। जो तल्लो मुस्ताङमा पर्दथ्यो ।[37] 'थुप्तेन ग्याल्छेनले पुरानो बौद्ध ऐतिहासिक पुस्तकको विषयमा उल्लेख गरे अनुसार मुस्ताङको पुराङ राज्यको दक्षिणी क्षेत्रको आबादीलाई तामाङ भनिएको छ। १३ औंदेखि १४ औं शताब्दीसम्म मुस्ताङ गुन्थाङको एउटा खण्ड मात्र थियो । गुन्थाङ पुराङको राज्यभित्र पर्दथ्यो अथवा पुराङ कै एक भाग थियो ।'

यसबाट के बुझ्न सकिन्छ भने आजको तामाङहरुको मुल थलो तल्लो मुस्ताङको से-मोनसम्म जान्छ। जसबाट तामाङ मात्र हैन थकालीको एउटा अंश, गुरुङ र मनाङ्गेको उत्पति भएको हुनसक्छ। यो उत्पतिको सिद्धान्तलाई थकालीले आफूलाई तमङ र गुरुङले आफूलाई तमु भन्ने तथ्यबाट पुष्टि भएको छ।"[38]

यहाँ मुख्य त तामाङ जाति वर्तमान नेपाल अधिराज्य भित्र कहाँबाट आइ बसोबास गरेको थियो भन्ने जानकारी लिनु र दिनुनै हो । उपरोक्त तथ्यहरुको विश्लेषणले मुलत तामाङहरुको मुख्य उत्पत्ति थलो जडानदेखि वर्तमान घना आबादी भएको गोर्खा, लमजुङ, धादिङ, नुवाकोट, रसुवा आदि जिल्ला ओगटने 'हिमालको दक्षिणी पाटो पूर्वमा त्रिशूली र पश्चिममा बुढी गण्डकी नदी बीचको भाग हो ।

यो तामाङ भुभागमा तामाङ जातिका पहिचानहरु मौलिक र शुद्ध तामाङपनले

---

[37] डा. गाब्रीयला ट्राउस्चर "तामाङ इतिहासको श्रोतहरु"-छारम्हेन्दो-वर्ष ६, लाडल्हो-१९९७, पृ.१३-१४,

[38] परशुराम तामाङ, "तामाङ जाति"-वि.सं.२०५१, को पृ.३१मा हेर्नुहोस्

यहाँका तामाङहरु पुराना भएको साबित गरेको छ ।[39] किन भने यो क्षेत्रको तामाङ गाउँहरुमा अझै हिन्दूकरण वा अन्य जातिकरण भएको छैन ।

तामाङहरु हरेक क्षेत्रमा स्वावलम्बी भेटिन्छन् यहाँका तामाङहरु सुती तथा उनीका थुप्रै प्रकारका तामाङहरुले लगाउने लुगाहरु आफै बुन्दछन् । नेपाली लोक्ताको कागज बनाउने, मकुण्डो खोप्ने, डम्फू, डमरु, ड्याङग्रोहरु बनाउने, चोयाका डोको, नाम्ला, थुन्से बुन्ने, मौलिक स्थानिय नेपाली आलु उत्पादन गर्ने, जडिबुटी संकलन गर्ने आदि काम आफ्नै तामाङपनमा गर्दछन् ।

तसर्थ तामाङहरु यस क्षेत्रबाट नै कालन्तरमा गोसाईकुण्ड हेलम्बु तथा याम्बुको बाटो हुँदै, सिन्धुपाल्चोक, मकवानपुर, काभ्रे, रामेछाप, सिन्धुली, दोलखासम्म फैलिए र त्यहाँबाट पनि विभिन्न कालखण्डमा विस्तारै पूर्वतिर दार्जीलीङ, सिक्किम, असम, अरुणाञ्चल, भ्रोटाङ, बर्मासम्म फैलिए ।

[39] टोनी हागन - नेपालको चिनारी-हिमाल किताब वि.स.२०५८ पृ.४८ "..तामाङहरुको मुख्य थलो काठमाण्डौ वरपरका क्षेत्र हुन् । आजभोलि महाभारत श्रृङ्खला, काठमाण्डौका दक्षिणी भाग, पूर्वी नेपाल र मधेसमा समेत उनीहरुको बसोबास पाइन्छ । दक्षिण भाग तिर उनीहरु भर्खरै मात्र झरेका हुन् । उनीहरुको मूल थलो गणेश हिमालको दक्षिण पाटोमा पर्ने पूर्वमा त्रिशूली र पश्चिममा बुढीगण्डकी नदीबीचको भाग हो । यहाँ होचो छाना र काठको बरण्डा भएका तामाङहरुका परम्परागत घर देख्न सकिन्छ ।

गणेश हिमाल वरपरका क्षेत्रमा तामाङको परम्परागत संस्कृति धर्ममात्र होइन उनीहरुको शारीरिक बनौट पनि अन्यत्र भन्दा मौलिक रहेको छ । यहाँका मानिसहरु स्पष्ठ रुपमा मंगोल आकृति र खँदिलो शरीरका हुन्छन् । दक्षिणतिरका बस्तीमा भने तामाङहरु अरुजातिसंग मिसिएकाले उनीहरुको जीउ फेरिएको छ । उनीहरुको घरको शैली पनि फेरिएर भारोपेली नेपाली शैलीको भएको छ ।.."

# ༩་ ཏ་མང་ རྡོང་རབས་ ཕྲེན་ པ་རབས་

# तामाङ वंशावली अनुसार
# (ACCORDING TO GENEALOGY OF TAMANG)

तामाङ जातिको समाजिक इतिहासको मेरुदण्ड "ताम्बा" हो । जसले सदियौदेखिको अलिखित मौखिक तामाङ इतिहासलाई सहिरुपमा पुस्तौं पुस्तासम्म संरक्षण एवं हस्तान्तरण गर्दै ल्याएको छ । आजको तामाङ समाज र संस्कृतिको वाहक तथा जातीय पहिचानको संरक्षक संवाहक ताम्बा र उसको अन्योन्य मित्र अनि ज्ञानदेव डम्फ रहन पुगेको छ । यी नै ताम्बा र डम्फले कहँदै आएको स्थल तथा क्षेत्रहरु वास्तवमै तामाङका पिता पूर्खाहरुको आदिम उद्गम स्थलहरु हुन । किन भने ती स्थलहरु भनेको तामाङ जातिको पुर्खाहरु पुगेको, पाइला टेकेका स्थानहरु हन । त्यसैले तामाङ वंशावलीहरुमा साछ्या-नाम्छ्या तथा ठुङसा बब्सा अर्थात आफ्नो उद्गम स्थलको रुपमा ती स्थानका नामहरुलाई पपूजन वा वर्णन गरिएको पाईन्छ । तामाङका तामयीग लिपिमा(लामा लिपिमा) दशौं शताब्दीपछि लेखिएको अनुमान गर्न सकिने लिखित पुस्तकहरु 'ताम्बा काओतेन, जीक्तेन ताम छ्योओ, ह्रुओछेन् च्योप्गे, तामाङ च्युङनीला ठुङसा ब्वसा' आदि वंशावलीहरु र ताम्बाहरुले कहँदै आएका काओरानहरु अनि मानी व्हाओ, दोरा व्हाओहरुमा पनि तामाङका सन्तानहरुले बस्ती बसालेका तथा राज गरेका कुराको वर्णन गरिएको छ । यी मध्ये सबैभन्दा स्पष्ट

रुपमा बाह तामाङको ठुङसा बच्चामा[40] तामाङका सन्तानहरु पश्चिममा उगनलीङ (पेशावर), पश्चिम उत्तर तर्फ कमरलीङ (काबुल) र खाछ्योअीलीङ (उत्तरी काश्मीर), त्यसैगरी उत्तर पूर्वमा खामछ्योअीलीङ (ल्हासा, खाम)देखि ञीन्दालीङ(थारछेन युल/मुक्ति क्षेत्र)सम्म, दक्षिणमा बेतालीङ (बेतीया) र दक्षिण पश्चिम लङ्का, सुदूर पूर्व दक्षिणमा अमरलीङ(बर्मा), पूर्व बङगलीङ(बंगाल) र समदेनलीङ(मंगोल)मा पुगेको वृतान्त छ। यो वृतान्त प्राचीन इतिहाससंग पनि मेल खान्छ (हेर्नुहोस् फुटनोट)[41]।

बाह तामाङको वंशावलीको वृतान्तले अन्य प्रमाणिक तामाङ उद्गम इतिहास तथा अनुमानहरुलाई अझ पुष्ट्याइ दिएको छ। जसको बुँदागत रुपमा सार चर्चा गर्नु सान्दर्भिक नै हुने छ।

---

40 *जि.डि.लामा--अगस्त-१९८३ (वि.सं.२०४०) गाङतोक, स्यार डेन्जोङ द्वारा प्रकाशित पुस्तक* 'तामाङ च्युङनीला ठीमतेन तामछ्योअी'को पृष्ठ १० र १२ मा "तामाङ च्युङनीला ठुङसा केसा थेन बब्साला तामसीङ" शिर्षकमा यसरी लेख्नु भएको छ।"..ङोनगा काल्पो अुअीसाङ दाङबो दुअीरी(सेरथुप साङक्वेला) तेन्बारी सा जाम्बुलीङला मंगल पाङबा ग्लागुङरी चेनरेसीला जुमदुलसे टुबाला फटुब थेन मासिङ प्रेन ज्यामसी रेम्बो थेन श्रीङबुमो केसीनाम् ग्ला-ग्लारी डासी नीसीनाम् चीबाला क्यारमार तोर चीबाला ग्रोहीसीनसे बुज्योम मोक्योम ग्यामसे छ्याबालादुगु हीनसे म्ही ल्हुअीला चावा दोङबो म्हेमे थेन मामबालीसाङमो, ग्याम्से ज्हा च्युअीकेजीमु। खामजेन ङाक्पो म्हेमे दोङबो छेन्नु थेन मामबालीसाङमो ग्यामसे मोलम पीनसी नाङमु। म्हील्हुअीदा दु बर्खा सालबा ताखाअी। खोर्लो ग्याल्पो तासी सोलम्याखाअी। आब थेन आमासे तेन्बाला, लालु तेन्सी सेमरी माम्बा दोनारी ढुप नीखाअी। बीसी नाङमु।

भुच्युअीदुगुसे आबसे तेन्बाला माफुङदा तोमोचेन्सी बुम्बा, नाङसल, कोको म्हेन्दो छेसी, ज्याबु चाङमो फुलसी, साङ फरसी गुरु घनगी म्हाफुङला मीम्हादअु, यारी चेसुम नोम्बा, खाटम, दह्रर, नोम्बा म्हाफुम सादाङ रालबा, खीलबा, मुदाङ रालबा फ्रलबा, गुरु घनगी म्हाफुङल्हाखा, म्हीखा, म्हाम, यु दुडीम्हादुल्ने, म्हाफुङबीसी छ्योत्सी नामसेरीमनबा दोनारी ढुन्ना जुगोबीसी म्हाबकी दह्रर थेन म्हारगी कोस्यो कीनसी, यारी मीयादली दास्यु बर्खा कीनसी राङ राङला म्हामी कीनसी, ता थोरी क्वात्सी नीमा नीमा राङला आबसे तेन्बाला म्हाफुङ ङेनसी, म्हेफुङ बासीं ज्याज्यो च्योनदुगु स्यार मंगालीङ (भ.)लो बेतालीङ (बेतीया), नुब उर्गेनलीङ(पेशावर), ज्याङखामछ्योलीङ(काश्मिर), स्यार लोछाम अमरलीङ(बर्मा), लो नुब साङलीङ(लङ्का), नुबज्याङछाम कमरलीङ(काबुल), स्यारछाम खामछ्योलीङ(ल्हासा तिब्बत), ञीन्दालीङ(थारछेनयुल/मुक्तिक्षेत्र), च्योन गीकचा सामदेनलीङ मंगोल बीबा ग्लारी स्युसी छाया नीसलादुगु लीच्छ्रु बीमा छायाआगेन लीच्छ्रारी दुङदुल ङाच्याङ खामजेन ङाक्पो(महाचक्रवती शक्तिशाली) केसी ङाच्याङ ङाच्याङ आगेन आगेन ग्लारीखादेबान ग्लारी ङाबातासीनाम् छान खांअीदोबा ताजीम। दुङदुलला युम ङु टीमु।.चु ङु ग्याम्से कोला आतानी बीसी च्याङबास्या यारोङ बीबा बासीनाम् यारोङ ग्याम्से तेनदेअु बीबा जा केजीमु। तेनदेअु बीबानु आबाराङले बाङबा थेन ग्लाग्लारी ङासी छान थानबा ताजीमु। मीयादली थेन छ्योङमा ङामा ङासी थारेङ थारेङदोसी होस्पा ग्यातरी थार्बा जाजीमु। बोगीकसे ङा कोअीमा सीङ्गीदेबाला जामे चाङ्गमीनान बीबा म्हेरी स्होसीनाम"सोङदेअु" केजीम। चु हीनसे लीच्छ्रु छाया ग्याजा सोम, यो आयो नाङरी तेनदेअुला छायादुगुला मीन "सेलेरुठा" छासी-दामचीमानाम थेन ग्हेरी सोसी जा ङा जामे सोम केजीम। सेलेरुठा थेन दामचीमानाम ग्यामसे केबाला जा ङला मीन थेन जामे सोमला मीन चुरी माङ पीन्बाला मुला। १. जा थेबा -ल्हुङगुपाल खामछ्योलीङरी फेप्चीम, २. पाराङ-सीङ्गीपाल, याम्बु युलरी स्युजीमु, ३. सांजी-रालुङपाल, आम्बरलीङरी फेप्चीमु, ४. कोंजी -मीन्नीपाल, बाङ्गलीङ्गरी फेप्चीमु, ५. च्याङबा -दुङदुपाल, मोनुपालीङ(किरात) ताजीमु। जामेसोमला मीन १. माअी थेबा- अीरोङ, ॥ दोबा ग्लादा अीरोङ मीन छ्याजीमु। २. माअी पाराङ-म्हेरोङ ॥ दोबाग्लादा साअीरोङ (साअील्हङु) मीन छ्याजीमु। ३. माअीच्याङबा-केरोङ, दोबा ग्लादा केराङमीन छ्याजीमु।....."

41 भोटे जातिको इतिहास - " इ.पू. ४०००-३००० तिर उत्तर पश्चिम चीनबाट मंगोल जाति आई होवाङ नदीको तिरमा चीनी सभ्यताको पहिलो जग हालेको थियो। यहाँ आएर यिनीहरुले साहित्य, लिपि, दर्शन र कलाको क्षेत्रमा खुब प्रतिष्ठा कमाएर त्यसपछि बौद्ध धर्मको चीन प्रवेशको कारणले गर्दा यो सभ्यता झन अगाडी बढ्यो। इ.पू. २००० तिर यसै भोटे जातिका एक शाखा श्याम बर्मातिर लागे, अर्को एक शाखा तिब्बत(भोट)मा गएर बसे र यिनीहरु (तिब्बतका) कै शाखा हिमालयको दक्षिणी भाग नेपाल, उत्तरपूर्वी बंगाल, सिक्किम, भूटान, आसाम, लद्दाख आदि ठाउँहरुमा बस्दै गए भन्ने इतिहासकारको भनाई छ। यी मंगोल जातिको उल्लेख यजुर्वेदमा पनि पाईन्छ र यीनै मंगोल मूलका मानिसहरुलाई नेपाली इतिहासमा भोट (तिब्बतको) बाटो गरेर आइ विशाल रुपमा बसोबास गरेको यिनीहरु भोटे पनि भनिन्छन्।" सिताराम तामाङ, ..धुन्डेल -मसिर-२०३३ -पृ. १

## ༼ཀ༽ ཡུང་བ་ ས་ཇ་ལ་ གུམ་ पाषाण ढुंगे हतियारको मार्ग

रुसको लेनिन ग्राद विश्व विद्यालयका प्रागऐतिहासिक पुरातत्त्वविद डा.एनातोली याकोब्लेभ सेटेन्कोको (१५ जनवरी देखि २४ मार्चसम्मको) सन १९७८ मा काठमाण्डौ उपत्यकाको उत्तर बुढानिलकण्ठको धोबी खोला बानीयापाखा र पण्डित गाँउमा गरिएको उत्खननमा प्राचीन पाषाण औजारहरु भेटिएको थियो। उक्त प्राचीन पाषाण औजारहरु अनुसन्धान तथा विश्लेषणले उपत्यकामा मंगोल मूलका प्रागमानवहरु मंगोलियाको गोबीबाट भोट हिमालय पार गरि आइपुगेको र ती मंगोल मूलका प्राग-मानव तामाङ भएको अनुमान गरिएको थियो।

यो कुरालाई तामाङ वंशावलीले पुष्टि गरेकोछ। किनभने तामाङ वंशावलीमा तामाङका सन्तानहरु मंगोलीयाको गोबीदेखि चीन, तिब्बत तथा हिमालयका सम्पूर्ण भागहरु उत्तरमा मंगोलीया, दक्षिणमा लङ्का, बेतीया, पश्चिममा काबुल, काश्मिर, पेशावर पूर्वमा बंगाल, बर्मासम्म पुगेको वर्णन गरिएकोछ। तसर्थ ३० हजार वर्ष पहिले याम्बु(नेपाल उपत्यका) आइपुगेको पाषाण ढुंगे हतियारको मार्ग तामाङ वंशावलीमा उल्लेख भएको पाइएको छ भने पुरातत्त्वविदहरुले त्यो जाति मंगोल तामाङ जाति भएको संकेत गरेको छ (हेर्नुहोस् हाम्रो समाज एक अध्ययन, पेज-)।

## ༼ཁ༽ ཇ་ཏན་ ཕྲེན་ ཕར་ཚེན་ ཡུལ་ལ་
## तामाङ वंशावलीमा जडान र थारचेन युल(मुक्तीनाथ)

तामाङ जातिको प्राचीन भूमि तथा सभ्यताको केन्द्र जडान प्रदेश भएको संकेत १२ औं तथा १३ औं शताब्दीतिर त्यस भूभागमा प्रबल तामाङ सेमोनसेरिब अधिराज्यको अस्तित्व मुक्तिनाथ आसपास भेटिएको छ। मुक्तिनाथलाई बाह्र तामाङको *टुङ्सा बब्सामा तामाङ भाषा* थारछेन युल/जीन्दालीङ भनिएको छ। तसर्थ तामाङहरु मुक्तिनाथ क्षेत्रमा प्रागैतिहासिक कालदेखिनै भएको ऐतिहासिकतालाई तामाङ वंशावलीले पनि पुष्टि गरेको छ। जो क्षेत्र तामाङ भूमि जडान प्रदेशको मध्यभाग नै हो। अझै यस क्षेत्र नजिकका तामाङहरुलाई हुम्ली तामाङ भनेर चिनिन्छ।

यो क्षेत्र साझा भाषा, धर्म भएको मंगोल मूलको तामाङ/तमङ/तमु जातिको मुख्य बासस्थान हो। तामाङ वंशावलीले वर्णन गरेको वृतान्तमा प्रायः सम्पूर्ण तामाङ भूमि जडान प्रदेश(पश्चिम काबुलदेखि पूर्व बर्मासम्म र मंगोलिया, ल्हासा, खाम उत्तरदेखि दक्षिण बेतीया लङ्कासम्मको वा हिमाली पहाड प्रदेश **Pan Himalayan** क्षेत्र उल्लेख भएको हुँदा यो भूभागको प्रथम बासिन्दा तामाङ जाति हो भन्न सजिलो भएको छ। यसले जडाननै तामाङहरुको उद्‌गम क्षेत्र हो भन्ने आधार लाई बल प्रदान गरेको छ।

काठमाण्डौ उपत्यकाको प्रथम आबादी बसाल्नेबारे वंशावलीको कथन र बाह्र तामाङको वंशावलीसंग पनि उत्तिकै सम्बन्ध देखिन्छ। काठमाण्डौ उपत्यकाको तलाउको पानी सुकाउने र वस्ती बसाल्ने बोधिसत्व महामञ्जुश्री पनि महाचीनबाट आउनु भएको थियो। तामाङ वंशावली अनुसार तामाङहरु ल्हासा, खाम तथा मंगोलीया पुगेको वर्णन छ। दुरदर्शी एवं ज्योतिषका महापण्डित बोधिसत्व महामञ्जुश्रीले तलाउको पानी सुकाएर अति उर्वर भूमिमा तामाङ(मंगोलहरुको) बस्ती बसालेको अनुमान गर्न सकिन्छ। तामाङहरुको महामञ्जुश्री प्रतिको धारणा बारे माथि नै वर्णन गरिसकिएको छ।

उपरोक्त तथ्यहरुको आधारमा तामाङ वंशावली एवं उत्पति तथा उद्गम स्थलको लिखित तथा मौखिक वर्णनहरु मानवशास्त्री, समाजशास्त्रीय तथा प्रागैतिहासिक पुरातात्विक वैज्ञानिक खोजका प्रमाणहरुसंग उत्तिकै निकटता राख्ने कुरा प्रमाणित हुन्छ। तसर्थ तामाङ जातिको उद्गम स्थानको खोजी गर्दा जुनसकै दृष्टिकोण र सिद्धान्तहरुको आधारमा खोजीगरे तापनि समष्टीमा मंगोलीया (फाब्पा/फाग युल/आर्य/पवित्र भूमि)देखि वर्तमानको हिमालय काख तथा पहाडी भूभागहरु नै तामाङ जातिको उद्गम थलो हो भन्ने कुरा छर्लङ्गीएको छ।

उपरोक्त तामाङ जातिको उद्गम तथा उत्पतिको निचोडबाट यो अडकल निकाल्न सकिन्छ, कि कालान्तरमा ह्योल्मो तामाङबाट ह्योल्मो जाति, ग्रोङबाट गुरुङ अनि फेरी अहिले तमु, थकाली तामाङबाट हिजोआज लालचन, भट्टचन सुद्ध थकाली जाति, हुम्ली तामाङहरु कति विष्ट भए, कति खाम मगर भए, कति छन्त्यल भए, कति मनाङबाहरु गुरुङ हुँदैछ, जिरीकाहरु आज जिरेल भए, कति ग्रोङ वा रोङहरु रोङपाबाट किराती भए होला, तापनि भाषागत, धर्मगत, भेषभूषागत, संस्कृतिगत आदि यी सबै पक्षलाई घोरिएर नियाल्दा अन्यथा पाउन ढुंगा निचोरेर पानी निकाल्छु भने जति कै हुनेछ।

ཉི་ ད་མང་ རྒྱལ་ས་ལ་ ཀེ་རྒྱབ་

# तामाङ अधिराज्यको इतिहास

# (HISTORY OF TAMANG KINGDOMS)

तामाङ अधिराज्यहरुकाबारेमा मौखिक रुप वाहेक लिखित इतिहास विरलै पाइन्छ। तर तामाङ ह्युल्साहरुको भ्रमणको दौरानमा मैले मौखिक रुपमा थुप्रै तामाङ राजा र तामाङ अधिराज्यहरुको बारेमा सुनेको थिएँ। त्यहि आधारमा लेखोट तयार गरेको थिएँ। धेरै पहिलेदेखि नै यी सुनेका कथ्य तथा मौखिक तामाङ राजाहरुको इतिहासहरुका बारेमा एउटा सानो पुस्तिका तयार गर्दै थिएँ। सोही पुस्तिकाको छाँया रुप तामाङ अधिराज्यहरुकोबारे विभिन्न पत्र-पत्रिका तथा पुस्तकहरुमा छरिएर रहेको र मुख्य मुख्य मौखिक इतिहासहरुलाई सक्दो, देखे, सुनेसम्मको निम्न अनुसार समेट्ने प्रयास गरिएको छ।

(१) तामाङ से-मोनसेरीब अधिराज्य, (२) लार्चेन ग्ले(अबुराजा/हुंगराजा) जारनाङ
(३) रुम्बा ग्ले, ककनी, नुवाकोट, (४) ग्हीसीङ ग्ले, ताल्जु, दोरम्बा रामेछाप।
(५) रीन्जेनदोर्जे बल ग्ले, तेमाल,काभ्रे, (६) थुओीवा ग्ले, पश्चिम १ र २ नम्बर, धादिङ र नुवाकोट
(७) गुल्मी ग्लेसा/ग्याल्सा, मकवानपुर (८) अन्य स्थानहरुमा तामाङ ग्लेसा
८.१. गोल्जोङ रसुवा
८.२ ह्रीस्यंगु, सिन्धुपाल्चोक
८.३. वंशावलीहरुमा तामाङ ग्याल्सा(ग्लेसा) र ग्याल्बो(ग्ले)

# ༡་མུས་དང་ལ་ ད་མང་ སེ་མོན་སེ་རིབ་ རྒྱལ་ས་

# तल्लो मुस्ताङको तामाङ से-मोन, सेरीब ग्लेसा/ग्याल्सा

## (THE TAMANG SEN-MON-SERIB KINGDOM OF LOWER MUSTANAG)

तामाङ शब्दले तामाङ जातिलाई बुझाउने तथा ऐतिहासिकता प्रदान गर्ने हालसम्मको प्राप्त सबैभन्दा पुरानो १३ औं शताब्दीको ऐतिहासिक अभिलेख जसमा तल्लो मुस्ताङमा से-मोन तामाङलाई दवाउन मुक्तिनाथमा किल्ला बनाए(तामाङ जाति-पृ.३१) गुन्थाङका राजाका वंशावली अभिलेखमा ७ औंदेखि १४औं शताब्दीसम्म सेरीब तामाङ अधिराज्य कायम रहेको उल्लेख गरिएको छ ।[42]

यो अभिलेखले तल्लो मुस्ताङ क्षेत्रमा त्यतिखेर शक्तिशाली तामाङ राज्य भएको संकेत दिएको छ। अहिलेका थकाली जो आ-आफूमा परिचय दिंदा तमङ भनेर चिनाइन्छ, त्यस्तै मनाङ्ग जसको छुट्टै स्पष्ट छुटिने जात छैन तर भाषा धर्म तामाङसंग हुबहु मिल्छ, त्यसैले मनाङ्गेहरु तामाङ नै हो भन्ने अनुमान गर्न सकिन्छ, उनीहरुले राज्य गरेका थिए । यी थकाली वा मनाङका मनाङ्ग (तामाङ)को भाषामात्र होईन धर्म, थर तथा उपथरहरु पनि मिल्छ । यी क्षेत्रमा उनीहरुले अन्यत्रका तामाङलेभैं लामा बौद्ध धर्म अपनाएर आएका छन । अनि यो क्षेत्रकोबारेमा बाह्र तामाङको वंशावलीमा *थारछेन युल* मुक्तिनाथ)मा पुगेको वृतान्त छ। ती क्षेत्र आसपास अरु जातिका मानिसहरुको तुलनामा तामाङहरुको बाहुल्यता भएकोले राज्य स्थापना गरे । अझ गहन अध्ययन तथा अनुसन्धानहरु त्यस क्षेत्रमा गर्न सकेमा अहिलेको भन्दा धेरै उपलब्धिहरु हासिल गर्न सक्ने सम्भावनाहरु छ। किन भने मुस्ताङमा लिखित अभिलेखमा पाइएकाले त्यो भेगमा लेख्ने परम्परा रहेछ भन्ने थाहा हुन्छ । जे होस यो ऐतिहासिक अभिलेखले तल्लो मुस्ताङमा तामाङ राजा तथा अधिराज्य भएको दह्रो सूचना दिएको छ।

---

[42] परशुराम तामाङ-'तामाङजाति'-२०५१,पृष्ठ ३१मा दिएको विवरण..."तेह्रौं शताब्दीमा पनि "तामाङ" शब्द जातिवाचक थियो भन्ने बुझिन्छ। 'कातोग रिग्जीन ' ' ' ' ग्युर्ं (१६८८।१७५५) ले नारी गुन्थाङका राजाको वंशावली लेख्दा राजा बुम देगोन, जसले १२५३ ई.७ १२८० सम्म राज्य गरेका थिए,ले बनाएका किल्लाहरुको सूचि उल्लेख गरेका छन् । त्यो सूचिको पाँचौं र छैठौंमा निम्न कुराहरु भनिएका छन् : तल्लो मुस्ताङलो)मा से-मोन तामाङलाई दबाउन उसले मुक्तिनाथमा एउटा थाइन किल्ला बनायो । डोल्पोको मोनलाई दबाउन उसले डोल्पोमा ॐ मणि पद्मे हुं भन्ने किल्ला बनायो' (म्याकडोनाल्ड १९८९:१७०) । जेष्टको अनुसार डोल्पोमा 'मोन' भन्नाले डोल्पोको पश्चिमतिर बस्ने लामो नाक भएको बाहुन, क्षेत्री, ठकुरी तथा कालिगढ जातकामी, सार्की, दमाई जस्ता नेपाली जातका सदस्यहरुलाई बुझाउँछ । त्यो तिब्बेतीयन पाठ्यांशलाई पहिलो चोटी उल्लेख गर्ने डेविड ज्याक्सनका अनुसार 'से 'ले सेरिबलाई जनाउँदछ । त्यसैले तामाङ सेरिबको मोन जातिका मानिस हुन् । मोनपा भनेको सिमानाको गैर भोटे मानिस हुन् (१९८९:१७०)। आजसम्म पाइएकोमा तामाङ उल्लेख भएको सबभन्दा भन्दा पुरानो ऐतिहासिक अभिलेख यही नै हो । यसले एकातिर तामाङ शब्दलाई राजा त्रिभुवन र प्रधानमन्त्री भिम शम्शेरले दिएको नाम भन्ने भ्रम समाप्त गरेको छ भने अर्कोतिर यसले आफ्नो पहिचान समेत लेख्न नपाउने तत्कालीन परिस्थितितिर ध्यानआकर्षण गराउँदछ ।..." उल्लेख छ ।

## ༣་ ལར་ཆེན་ ལོཔ་ཆེན་ རྒྱལ་པོ་

# लार्चेन चोथेन/लोप्चन ग्ले, जारनाङ ग्लेसा/ग्याल्सा

## (THE KING LARCHEN CHOTHEN LOPCHEN OF JARNANG KINGDOM)

धादिङ जिल्ला स्थित जारनाङ गा.वि.स. नै लार्चेन ग्लेको ग्लेसा(ग्याल्सा) हो । एउटा तिब्बती इतिहासमा सन ८०२ इ.मा गुरु पद्मसम्भवले राजा ठिसोङदेउचनसंग तिब्बत छाडेर अनेत्र जाने इच्छा व्यक्त गर्नु भएपछि राजाले आफ्नो सम्पूर्ण भारदार हरु समेत पद्मसम्भवलाई माङयुल अर्थात वर्तमान केराङसम्म पुऱ्याउनु आउनु भएको थियो । त्यहाँबाट गुरु पद्मसम्भव आफ्नो सहयोगिहरुको साथमा दुई दिनसम्मको पैदल यात्रापछि जारनाङ (तिप्लीङ)को लेक सिंगाला(सिंल्हा) पुग्नु भइ त्यहाँका राजा तथा एकहजार जना उपासकहरुलाई धर्मदेशना गर्नु भएको थियो ।(निमाछिरिङ शेर्पा-बुद्धंशरणं गच्छामि-पृ.२३) यो वृतान्तले यो तामाङ अधिराज्य आठौं शताव्दीसम्म अस्तित्वमा रहेको संकेत मिलेको छ ।

ग्ले लार्चेन चोथेन (लोप्चन) थरको थियो । यहाँ विशाल जारनाङ ग्लेसा ( ग्याल्सा) रहेको थियो । आधाजसो यो ग्याल्साको भूभाग वि.स.२०३१ सालमा गएको पहिरोले लग्यो । यहाँ एउटा प्राचीन गोन्पा छ । ग्याल्साको सिरानमा भएको ऐतिहासिक ताल पहिरोका कारण अहिले छैन । काठमाण्डौबाट यो ग्याल्सा पुग्न एक दिन मोटर मा र डेढ दिन पैदल हिंडेर पुग्न सकिन्छ । जारनाङ विशुद्ध तामाङ जातिमात्र

बसोबास रहेको ग्लेसा हो । जारनाङको लार्चेन ग्लेको मातहातमा त्यसभेगका थांगङ, सेर्तुङ, तिप्लीङ, लाप्चेत, लापा, लाबु, ह्री, तावाल, कुताल आदि बस्तीहरु थिए । जारनाङ पुग्नु अगाडि ढुंगाको पहरा भएको बाटो भएर मात्र प्रवेश गर्न सकिन्छ । सो पहराको बाटोमा एउटा न्यायनिसाफ छुट्याउने द्वार रहेको छ । भनिन्छ त्यो द्वारबाट जारनाङ ग्लेसामा अपराध गरेर, अपराधीहरु पार गरेर जान सकिन्दैन । जसले गर्दा यो राज्यको सुशासनको महिमा छिमेकी राज्यहरुमा समेत चर्चा हुने
गरेको अझै बताइन्छ ।

लार्चेन ग्लेलाई त्यहाँका तामाङहरुले "अबुराजा" भनेर पुकार्ने गर्छन्[43] । लार्चेन ग्लेलाई त्याहाँ तामाङहरुले "हुंगराजा" भनेर भन्ने गरेको पाइन्छ । जारनाङ लगायत त्यस भेगको सम्पूर्ण क्षेत्रलाई "सेल्कर जोङ" भन्नेगरेको पनि स्थानीय तामाङहरुको कथन सुन्न पाइन्छ । बौराङ निवासी मार्का तामाङका अनुसार लार्चेन ग्ले जानरनाङ ग्लेसाको अन्तिम तामाङ ग्ले हुन । उनकै पालामा गोर्खाका राजाले गोर्खा राज्यमा गाभेको बताएका छन् उनको भनाईमा अनुमान लगाउँदा पृथ्वीनारायण राजा हुनु अगावै गोर्खा राज्यकोअधिनमा परेको थियो । तर पनि यहाँ धेरै पछिसम्म गोर्खाराज्यको वा अरु राज्यको शासन रहेको संकेत पाईदैन । बोमताङ भेटिएको गोर्खा राजाको एउटा सरकारी सनदले जारनाङ तामाङ ग्लेसा पनि अुओबा ग्लेसासँगै गोर्खाले अधिन पारेको अनुमान गर्न सकिन्छ ।

भनिन्छ, अधिकांश लोप्चनहरु जरनाङबाट दुङदुङ र अनि त्यहाँबाट बोमताङ, "लमजुङ, हाल चितवनसम्म पुगको बताइन्छ ।" कति त्यतैबाट रसुवाको गालाङ, ब्राबल, राम्चे हुँदै हेलम्बु, मेलम्चीबाट अझ पूर्वतिर लागे । जारनाङ लगायत त्यस क्षेत्रका तामाङहरुले जारनाङमा लार्चेन ग्ले भएको कथन गर्वका साथ वर्षौंदेखि अहिलेसम्म बताउँदै आइ रहेका छन् ।



---

[43] अजितमान तामाङ-"बरुहयुल्सा"-२०५०, प्रकाशक नेपाल तामाङ घेदुङदा जगतबहादुर तामाङ, बुङताङ, प.नं.१.नु.जि. तामाङ भाषिय तथ्यकथ्य संग्रहमा *अला जारनाङदा ता ताजी ? लार्चेन ग्लेको ग्लेसाकोबारेमा लेखिएको छ .*

## ३' རུམ་པ་ ཁྲི་ रुम्बा ग्ले, ककनी ग्याल्सा, नुवाकोट

## (THE RUMBA KING OF KAKANI KINGDOM, NUWAKOT)

काठमाण्डौ उपत्यकादेखि २० कि.मि. उत्तर पश्चिमको अति रमणीय दृश्यावलोकन गर्न सकिने डाँडोलाई 'ककनी' भनिन्छ । काठमाण्डौबाट प्राचीन कालदेखिनै जितपुर , पाँचमाने, ककनी, रानीपौवा(ल्हा-जो)-चतुराले-मालकोट-गंगटे-बेत्रावती-दुङजे-स्याफ्रु-थोङमेन हुँदै रसुवागढी अनि केरोङ भोटसम्म पैदल जाने व्यापारिक मार्ग हो । जो अद्यावधि प्रयोग भइरहेकै छ । ककनीमा रुम्बा थरका तामाङ राजाले राज्य गरेको थियो भन्ने कथन ककनीका प्रायः पाको उमेरका सबै तामाङहरुले सुनेका छन । रानी पौवा लामा गाउँ निवासी स्व. ललितमान लामा ककनी गा.वि.स.को प्रधान हुँदा धेर लाई रुम्बा ग्लेको दरवार (ग्लेदीम / ग्याल्खाङ)को भग्नावशेषहरु भएको स्थान देखाएको बताउनु हुन्थ्यो । उहाँले बेलाबेला उत्खनन् गरेर खोजी गर्न पाए हुन्थ्यो भनेर चासो पनि राख्ने गर्नु भएको थियो । केही वर्ष पहिले उहाँ स्वर्गीय हुनु भयो ।

ककनीमा तामाङ जातिले राज्य गरेको कुरा तामाङ विद्वान सिताराम तामाङले तामाङ जातिको इतिहास सम्बन्धि आफ्नो पुस्तकमा र तिलक बहादुर नेगीले आफ्नो लेख 'तामाङ जातिको उत्पति'मा पनि उल्लेख गर्नु भएको छ ।

ककनी नाम कसरी रहन गयो भन्ने सन्दर्भमा रसुवा जिल्लाका तामाङहरुले गाउने तीर्थस्थल सम्बन्धी गीतमा "...*छ्यासाला गाङ्ला कारकानी थुङ्सोङ, याम्बुला ने-सोम थोङ्सोङ...*" अर्थात दर्शनीय डाँडा को कार (सेतो) कानी प्रवेशद्वार(गेट) काठमाण्डौका *सीङकोन, खास्योरे* तिर्थको दर्शन पाइन्छ .. भन्ने हुन्छ । गीतको यो वर्णनले ककनीमा राज्य भएको दर्शाउंछ । छ्याँसालो गाङको "कारकानी"को अपभ्रंश भएर 'काकानी' बाट ककनी रहन गएको कुरा सहजै अनुमान गर्न सकिन्छ । किनभने तामाङभाषा आकारअन्त हुने भाषा भएकाले 'ककनी'को उच्चारण 'काकानी' हुन्छ । प्रायः मंगोल तथा चिनियाँ पुरानो राज्य वा बस्तीहरुमा चारैतिर पर्खालद्वारा घेरी त्यस्तो कानी(प्रवेश द्वार) बनाएको हुन्छ । यस्तो उदाहरण नेपालको काठमाण्डौको हनुमान ढोका, कीर्तिपुर, पाटन, भक्तपुर, साँखु आदि शहर वा पुरानो बस्तीहरुमा देख्न सकिन्छ । तामाङ गाउँ स्याफ्रुवेसी, जारनाङ, बोराङ, बोमताङ आदि स्थानहरुमा पनि कानी बनाएको छ । शासक जातिका इतिहासकारहरुले नेपालको शासकहरुको लिखित इतिहासमा यो कुरा लेखेका छैनन् । तापनि 'ल्हा जो' रानी पौवा भेगका तामाङहरुको जिब्रोमा, रुम्बा थरको तामाङ राजाको, ककनीमा राज्य थियो भन्ने मौखिक इतिहास नमेटिने गरी अद्यावधि झुण्डिनै रहेको छ । कसैले नलेखिदिए पनि ककनीका तामाङहरुले रुम्बा राजाको इतिहास कहँदै आइरहेका छन् ।

दोरम्बाको ताल्च्यो गाङ जहाँ ग्हीसीङ राजाको दरवार को भग्ना अवशेषहरु
रहेको स्थान रामेछाप जिल्ला (कु-पार-१५/तामाङ ह्युल्सा त्रैमासिक पत्रिका ग्यास्से स्युत्पा)

## ༨་ གྷི་སིང་ གྱལ་ ग्हीसीङ ग्ले, दोरम्बा ग्याल्सा, रामेछाप

## (THE GHISING KING OF DORAMBA KINGDOM, RAMECHHAP)

रोमेछाप जिल्लाको दोरम्बामा एउटा ताल्च्यु भन्ने स्थान छ। यही स्थानमा ग्हीसीङ घरको तामाङ राजाले राज गरेको मौखिक इतिहास दोरम्बाका तामाङहरु माझ अझै पनि सुन्न पाइन्छ। सुन्नमा मात्र होइन ताल्च्युमा ग्हीसीङ ग्लेको(ग्हिसीङ राजाको) दश तले ग्याल्खाङको भग्नावशेषहरु अझै देख्न पाइन्छ । साथै घोडाको तबेला जस्तोमा दानापानी ख्वाउने वर्तनहरु पनि छ। ताल्च्युमा ग्हीसीङ ग्ले रहेको कुरा ह्रुअीछेन च्योप्पे तामाङ वंशावलीमा पनि उल्लेख छ ।[44]

त्यस्तै कोनडोङडोङ वर्ष: १ अंक: १, असार सन १९९३, काठमाडौं मा प्रकाशित विद्यासागर योन्जनको तामाङ भाषामा अनुदित लघु लेखमा "दोरम्बा नाम्सारी 'ताला च्युअी' (दश तल्ला) भन्ने ठाँउ छ। त्यो पहिले ग्हीसीङ राजाको राज्य थियो । त्यहाँ राजाको १० तले दरवार थियो । अझै उक्त 'तला च्युअी' दरवारको भग्नावशेष त्यहाँ छ । यो भग्नावशेष भएको डाँडामा छ्योर्तेन(माने) तथा ह्रीगी पाटीहरु बनाएर कतिपय भग्नावशेषहरु नष्ट भएका र हराउनेक्रममा छन् । र पनि 'अझै अठारवटा घरको भग्नावशेषहरु भने प्रस्टै गन्न सकिने अवस्थामा छन्' ।[45] त्यहाँ घोडालाई वा बस्तुभाउलाई पानी दाना दिने जस्तो भाँडो, धान कुट्ने ओखलहरु

[44] तामाङ जाति-२०५१, पृष्ठ४३ तेश्रो प्यारागाफ हेर्नुस् ।

[45] साङ दोर्जे तामाङ घिसिङ- घिसिङहरुको ऐतिहासिक थलो ताल्च्यो गढी -ह्युल्सा त्रैमासिक-बैशाख-२०५८, वर्ष-१, अंक-१, पृ.१६ - १८

थिए र कति सामाग्रीहरु स्थानिय बासिन्दाहरुले लगिसकेका छन्। ग्हीसीङ राजा शक्तिशाली हुनु हुन्थ्यो । सन् १७६२ ई.को भाद्र महिनामा गोर्खालीहरुले मकवानपुर को दिग्बन्धन सेनलाई लखेटेपछि रामेछापको ताल्ज्यु पनि हात पारेको कथन छ।[46] गोर्खा राजाले हराएपछि ग्हीसीङ राजा र उनका सन्तानहरु सिन्धुली, दोलखा, चरिकोट, तिल्पुङमा बसाँइ सरेको भनिन्छ।"

सैलुङ क्षेत्रका तामाङ इतिहासको बारेमा अध्ययन गर्नु भएका अष्ट्रीया भियनाकी डा.गाब्रीएला ट्राउश्चरले पनि आफ्नो अध्ययनमा रामेछापको तालेज्यु गाङमा ग्हिसीङ राजा थियो र फोब्राङमा बस्दथ्यो अफै दरबारका भग्नावशेषहरु देख्न पाइन्छ।[47] भनि उल्लेख गरेका छन्।



46 "भाद्र, सन् १९६२ ई. मकवानपुर विजय गरिसकेपछि सिन्धुली गढी, रामेछाप, तिमाल, धुलिखेल, बनेपा, चौतारा आदि ठउँहरुलाई पनि गोर्खालीहरुले विजय गरी आफ्नो पूर्वी सिमाना दुधकोशीसम्म पुऱ्याई पूर्वी किरात राज्यसंग जोडे।" -चन्द्रबहादुर थापा -नेपाल राज्यको एकिकरणको इतिहास -( वि.स.१७९९-१८५१। इ. १७४२ -१७९४ ) पृ.- ७०- ७१

47 **Gabriele Tautcher, vienna The Five Tamang Ancesters and Sailung Phoi Sibda Karpo-1997,...."only talejugang was known as a petty kingdom of the Ghishing where the Ghishing King lived in a fortress [tam photang, tib. phobrang] the remains of which can still be seen near the village of Doramba" ...... "During the time of Prithvi Narayan Shah"."The Kingdom of the Ghising in Talejugang is said to have been destroyed. The land of Tamang was confiscated and given to army members from the Hindu Chhetri cast and to Magars who had fought for the Gurkha rulers as soilders.The Tamang land was categorized into Kipat, birta or guthi."**

# ཕ་ རིན་རྗིན་ རྡོར་རྗེ་ བལ་ གྱལ་

# रीन्जेन दोर्जे बल ग्ले, तेमालग्लेसा/ग्याल्सा, काभ्रे

## (THE KING RINJIN DORJE BAL OF TEMAL KINGDOM, KAVRE)

तामाङ बहुल जिल्लाहरु मध्ये काभ्रे पनि एक हो । तामाङ संस्कृति औ इतिहासमा नेपालका पूर्वक्षेत्रमा काभ्रे तेमालको नाम चर्चितछ । तेमालको नामले बौद्ध स्वयम्भूमा हरेक चैत्र महिनाको पूर्णिमाका दिनदेखि दुईदिनसम्म "तेमाल जात्रा" मेला लाग्ने गर्दछ । तामाङ वंशावलीहरुमा पनि तेमालको राजालाई बलका थेत(स्वाँग) दोङ छेन्पो पनि भनिन्छ । दोङ र कतै बल थरको किपट हो भनेर पनि वर्णन गरेको पाइन्छ ।

तेमाललाई तामाङहरुले 'माबर' पनि भन्ने गर्छन् । यहाँ कोट भएको 'कोट तिमाल'को नामले पनि यो स्थान प्रसिद्ध छ । बोधिचित्त ठेड्वा मालाको फल तेमालमा मात्र फल्छ । अन्यत्र यो बोधितित्तको खेती हुँदैन भन्ने जनश्रुति छ । त्यसको अलावा तोडसोम कुण्ड यहाँको अर्को महत्वपूर्ण ऐतिहासिक धार्मिक स्थल हो । यहाँको गुफामा गुरु पद्म सम्भवले तपस्या गरेको विश्वास गरिन्छ । तामाङ जातिको बाहुल्यता रहेको यो बाह्र तेमालमा, कोट तेमाल डाँडामा शिलालेख भएको उक्तठाउँमा तामाङहरुले नै कोट पूजा गर्दै आईरहेका छन । नेगीका अनुसार "....सोही ठाँउको गिम्दी गाउँमा रहेको ने.स.२३४ को शिलापत्र र ने.स.८५६ को ताम्रपत्र र ज्याम्येङ लामाको त्यस ठाँउमा प्रसिद्ध दन्त्य कथाबाट ...त्यस क्षेत्रमा मल्लकालीन समयमा पनि तामाङ राजाले राज्य चलाएको प्रष्ट हुन्छ ।.....ज्या छोन उर्गेन युल सांगदो पालकी ग्याल्सा अर्थात इन्द्रेणी रुपी ताम्र भुवन प्रतिपालित तथा त्यसमध्ये एक जना ताम्र गुरु वर्तमानको सिन्धुपाल्चोक अनि तेमाल, अमाल, दोलखासम्म पुगे...पछि ताम्र गुरु तामा, तमु, तेमाल र तेमालबाट यिनीहरुको जात तामाङ भए ।"[48] तामाङ इतिहासबारेमा प्रथम पल्ट कलमचाउनु हुने विद्वान सिताराम तामाङले काभ्रेका तेमालमा बल थरको तामाङ राजाले राज्य गरेका तथा वि.स. १८१९ असोज २ गते पृथ्वीनारायणले बल राजालाई विजय हासिल गरेको लेख्नु भएको छ ।[49] त्यसरी नै 'काभ्रे जिल्लाको तेमालमा रिन्जेन दोर्जे दोङ राजा भएको रहेछ । दोङ राजाको चार छोराहरु थिए । दोङ राजा रिन्जेनदोर्जेको पृथ्वीनारायणशाहबाट

---

[48] *तिलक बहादुर नेगी* -तामाङ जातिको उत्पत्ति-ता.भा.स.वि.स.-बुलेटिन-२०४०,काठमाण्डा

[49] *सिताराम तामाङ*-"तामाङ जातिको उद्गम् इतिहास तथा राष्ट्रियताबारे"-२०४८ पुस्तकको 'तामाङहरु किन पिछडिए ?' भन्ने शिर्षकमा पृष्ठ ३०मा यसरी लेख्नु भएको छ......"पृथ्वीनारायणले आफ्नो जेठान दिग्वन्धन सेनलाई वि.स. १८१९ भाद्र ९ गते लखेटेर मकवानपुरमा आफ्नो शासन कायम गरे । त्यसपछि उनी पूर्वलागे । त्यहि साल असोज २ गते तिमाल डाँडालाई पनि विजय गरे र सिन्धुली गढीतिर ओर्ले । अनि ककनी, धादिङ, रिसंखु आदि राज्यहरु जिते होलान ।...." यसैको अन्तिम हरफमा ..."त्यसरी नै मकवानपुरको बेतिनीमा पनि तामाङ राजाको दरबारको भग्नावशेष पाइएको छ । त्यहाँ थिमिङ थरको राज्य थियो । तिमाल डाँडा -हाल काभ्रे जिल्लामा पर्दछ ।। अहिले पनि तामाङहरुको लागि महत्वपूर्ण थलो मानिन्छ । त्यहाँ बल हरुको राज्य थियो । त्यसरी नै ढीसंगुमा योन्जनहरुको राज्य पाइएको छ । यी कुराहरु हाम्रो खोजीका विषय हुन ।.."

युद्धमा मारिएको थियो । तेमाल भेगमा "दी ग्युअी ग्लेला सन्तान डानी" भनेर दोङ बलहरु भन्छन् ।[50]

तेमालमा बल ग्लेको दरवारका भग्नावशेषहरु ईंटा, बुट्टा कुँदिएका काष्ठकला, तथा प्रस्तर कलाहरु अझैसम्म देख्न पाइन्छ । त्यस भग्नावशेष भएको स्थानलाई आजभोलि खरदारपाटी भनिन्छ(तेमाल जात्रा-२०५३)। "तेमाल जात्रा" नामक पुस्तक अनुसार ..किरात कालीनमा रिन्जेन दोर्जे बल नामक राजाले राज गरेका थिए । उनका पाँच छोरा र दुइ छोरीहरु थिए । रिन्जेनदोर्जे बल ग्ले पलान्चोक भगवतीका (?) राजाको बीचमा तेमाल बेंसीको उर्वरा भूमिलाई लिएर युद्ध भएको थियो । बलवान बल राजाको सामु उनको पराजय भएकोले सन्धि गर्ने निहुँमा पलान्चोके राजाले हातहतियार नलिई तेमाल बेंसीमा आउने समाचार पठाए तर आफूहरुले चाँहि पहिले नै बालुवामा हतियार लुकाएर राखे । भोलिपल्ट दुवै पक्ष बीच कुरा कानी हुँदै गर्दा बल राजा र चारभाई छोराहरुलाई मारिदिए ।[51] .." यसरी बल राजाको षडयन्त्र मुलक ढंगबाट अन्त भएको वृतान्त दिएका छन् ।

गोर्खालीहरुले मकवानपुरका अन्तिम राजा दिग्वन्धन सेनलाई धपाएपछि तेमाल राज्य लगायतपूर्वमा दूधकोशीसम्म आफ्नो राज्य विस्तार गरेको बाहेक तेमालका बल ग्लको बारेमा नेपाली इतिहासले केही बोलेको छैन । तर तेमाल पोखरीनारायण भेगका तामाङहरुले बल थरको तामाङ राजाले राज्य गरेका कथनलाई दह्रो विश्वासका साथ आजभोलि पनि बताउँदै आएका छन् । यो राज्य शैलुङ वरिपरीका 'खे ङा' अर्थात पाँच बाजेहरुको अलग अलगै कविला राज्य थियो र यी मध्ये तेमाल एक हो । जसको वर्णन तामयींग तामाङ लिपिमा (लामा लिपि) लेखिएको 'कुम्पा खाछ्युोंअी' नामक ग्रन्थमा लेखिएको छ (गाब्रीयला ट्राउश्चर, भियना)।



---

[50] *लालबहादुर लामा, चन्द्र कुमार मोक्तान,* 'तामाङ राजाहरुको छोटो जानकारी- पृ-२५-..काभ्रे जिल्लाको तेमाल रिन्जेन दोर्जे दोङ राजा भएको रहेछ । दोङ राजाका चार छोरहरु थिए जसको नाम- माणिका, सुरुङथुक, लबोन छ्योअीकु र भूमि छीरीङ हुन । यी कुरा बुढापाकाको भनाईमात्र होइन बाह्र तेमाल गिम्दी गाउँमा रहेको ने.स.२३४ को शिलापत्र र ने.स.८५६ को ताम्रपत्रबाट प्रमाणित गर्दछ । तेमालमा बुझ्दा रशिलालेख हेर्दा यस स्थानमा पहिलेदेखिनै तामाङ राजाहरु थिए । तर रिन्जेन दोर्जे चाँही पृथ्वीनारायण शाहबाट नेपाल हमाला गर्दा जम्मा आधा दिनमात्र राज्य चलाई युद्धमा मेलुकि पख मारिए भन्ने दन्त्य कथा भएको कुरा "दी ग्युअी ग्लेला सन्तान डानी" भनेर दोङ बलहरु भन्दछन् ।'

[51]रविन्द्र तामाङ-"तिमाल जात्रा"-२०५३, ल्हास्सो थेत्मा काठमाण्डौमा र रविन्द्र तामाङ कै 'तामाङ जातिको इतिहासको रुपरेखा'-२०५८-पृ. २८-२९, । हेर्नुहोस्



(कुपार-१६)

## ༨་ ད་གུར་ ཨུཨི་བ་ གླེ་

## दागुर अुअीवा ग्ले थेन ग्लेसा/ग्याल्सा, पश्चिम १ र २ नम्बर

## (THE KING DAGUR WAIBA OF AUIBA KINGDOM, WEST N0 1 & 2)

नेपालको पश्चिम १ र २ नम्बर क्षेत्र तिब्बतको केरोङ(माङ युल, भोट) लाङ्घी तथा लाप्साङ कार्पो (गणेश) हिमालको मुनितिर, पश्चिम बुढी गण्डकी, पूर्वमा त्रिशूली नदी र दक्षिणमा त्रिशूली, बुढी गण्डकी दोभानमा रहेको छ। टोनी हागनले यसक्षेत्रलाई सबभन्दा पुरानो क्षेत्र जहाँ तामाङको सबै प्रकारको संस्कृति आजसम्म संरक्षित छ भनेर मान्छन। त्यसरी नै म्याकडोनाल्डले पनि पश्चिमका अर्थात यस प्रदेशमा मुर्मी (तामाङ) आफूलाई अन्य ठाउंको तुलनामा शुद्ध मुर्मी ठान्दछन् भनेका छन्।[52] यो क्षेत्रको संस्कृति, वेशभुषा र प्रत्येक गाउँ र गाउंको सम्पूर्ण डाँडा, थुम्का थुम्की, नदी, खोला नाला, बनस्पति लगायतको नाम सम्पूर्ण तामाङ भाषामा नै रहेको हुँदा यहाँ कुनै समय शक्तिशाली तामाङ अधिराज्य भएको जो कोहिले पनि अनुमान लगाउन सकिन्छ र यो अनुमानलाई त्यहाँका तामाङहरुमा अुअीवा वा वीबा ग्ले भएको जीवीत मौखिक कथन र सेमजोङ गाउँको डाप्साङजोको अवशेषले प्रमाणित गर्दछ। यो राज्यलाई त्यहाँका तामाङहरुले (वाअीबा थरको ग्ले भएकाले) अुअीबा वा यबा ग्लेसा वा ग्याल्सा भन्छन। यो राज्य अन्तरगत पाँचसय खोला, सात सय खोला

---

[52] *परशुराम तामाङ-तामाङ जाति-२०५१-पृ. २६ हेर्नुहोस्*

र अठ्ठार सय खोलाको भूभाग पर्दछ । १५ औं शताब्दीको अन्तसम्म यो ईलाकामा **होही दाश**[53] नामक ग्लेको अस्तित्व रहनुले होहीदाश ग्ले वाओीबा हुओी(थर)को भएको अनुमान लगाउन सकिन्छ ।

वाओीबा ग्लेको बारेमा हालको धादिङ जिल्लाको सेमजोड र नुवाकोट जिल्लाको बोमताङ गाउँका स्थानीय बुढापाका तामाङहरुले मौखिक रुपमा सुनाउने कथनहरु निम्न अनुसार रहेको छ । सेमजोडको वाओीबा गाउँ गओीराका धनसुर वाओीबाका अनुसार तीरत ग्लेका ग्लेजा (राजकुमार) दागुरका चार भाइ ग्लेजा (राजकुमारहरु) ओम्पा, सिम्पा, नाक्पो र कुन्दोस्हाङबो थिए ।

सेमजोड गा.वि.स. चौतारा निवासी वृद्ध गान्बा, ताम्बा फुरमान योन्जनका अनुसार यही सेमजोड गाउँको सिरानमा रहेको "डाप्साङ जो(थो)" मा वाओीबा ग्लेको दरवार थियो । वाओीबा ग्लेको *राजधानी सेमजोड* हो । ग्लेको नाम 'दागुर' र ग्लेस्या( ग्याल्मो) 'सालिनीमा(सिलिक्मो)' नामकी रानी थिए । बुङताङका गान्बा व्यक्तित्व सतल्सीं तामाङका अनुसार ग्ले दागुर म्यादली(धनुर्वाण)मा निपुण धनुर्धर हुनुहुन्थ्यो । उहांका छोराहरु 'ओम्पा, सीम्पा, नाक्पा र कुन्दोस्हाङबो' अनि नाम नखुलेको माम्बा( दोङ, गोलेसंग थेत/स्वांगे पर्ने स्थानीय) थरको तामाङ ज्वाँई थिए ।

वि.सं. २०४८ सालमा म लागायत केही उत्सुक साथीहरु सेमजोडको डाप्साङजोमा वाओीबा ग्लेको दरवारका भग्नावशेषहरु हेर्न गएका थियौं । हामीले डाप्साङ जोमा वाओीबा ग्लेको दरवारको भग्नावशेषहरु देख्यौं जो अझै छ । दरवारको भग्नावशेष भएको स्थानदेखि केही पर दुईवटा 'पुर्खाङ' या 'छ्योर्तेन' छुट्याउन नसकिने अवस्थाको छ । त्यसको वरिपरि दुइवटा पुरानो लेउ उम्रेर सुकिसकेको ढुंगाको पातामा ॐ म मणि पद्मे हुँ लेखेको मुस्कीलले पढनसम्म सक्यौं र एउटा टुटेका ढुंगाको बुद्धको जस्तो देखिने मुर्ति पनि देख्यौं । यी बस्तुहरुको अलावा सेमजोडवासीहरुले पटकपटक विभिन्न गरगहना, तीरका टुप्पा, स्ही, बज्र लगायत अनौठो बस्तुहरु फेलापारिएको कथन हामीलाई सुनाएका थिए । दरवारको भग्नावशेषका भित्ताहरुको माझ विशाल रुखहरु हुर्किसकेको हामीले देख्यौं ।

फुरमान योन्जन तथा बोमताङका सतल्सी तामाङ, हुंगबहादुर तामाङका अनुसार "...वाओीबा ग्ले शक्तिशाली पराक्रमी मात्र नभएर तान्त्रिक पनि थिए । दरवार रहेको स्थानदेखि दक्षिण पश्चिममा नेपालको सबभन्दा ठूलो सल्यान्टार छ ।

---

53 *धर्मरत्न शाक्य*-नुवाकोट जिल्लाको संक्षिप्त इतिहास-'शाहवंशको अगमन ' र यसै पुस्तीकाको ' ग्ले (घले) King' उपशिर्षक हेर्नुहोस् (बोमताङ डक-१९९४) ।



...ङको डाप्साङ जोमा रहेको मानी शीला)    (क... १)

इतिहासमा प. १ नम्बर क्षेत्र(हालको रसुवा, नुवाकोट, धादिङ जिल्लाको केही भाग)लाई पनि सल्यान भनिएको छ(*नेपालको खाका* शर्मा:२०३३ : १६) । त्यसटारसम्म गोर्खालीहरुको आधिपत्य कायम भयो । सो टार क्षेत्रबाट आफ्नो राज्य सीमा भित्र चर नमा आएको अनधिकृत गाईहरु वाअीबा ग्लेले जफत गरेर आफ्नो राज्यमा राख्ने गर्नुहुन्थ्यो । वाअीबा राज्यमा गोरुको मासु खाने परम्परा थियो । त्यस क्षेत्रका तामाङहरु अहिले पनि गाई गोरुको मासु खाने गर्दछन् । यो कुरा गोर्खालीहरुलाई मन परेको थिएन । त्यसपछि हिन्दूधर्मका मतवाला गोर्खा राजाले वाअीबा ग्लेको राज्य माथि युद्धको धावा बोल्यो । दुवै राजाहरुको भीषण युद्ध भयो । दुवै पक्षको ठूलो जनधनको क्षति भयो । युद्धमा गोर्खा राजाको हार भयो र युद्ध मोर्चाबाट गोर्खालीहरु पछि हटे । वाअीवा राजाले केही गोर्खा सेनाहरुलाई आफ्नो अधीनमा लिए । यो युद्धलाई डेभिड होल्मबर्गले १७३९ मा घले भोटे फौज(ग्ले फौज/भोटे राजाको फौज) अर्थात स्थानीय तामाङ ग्ले(राजा)संग नरभूपाल शाहको फौज बीच युद्ध भएको उल्लेख गरेका छन् ।[54] केही समयपछि गोर्खाका राजाले मेलमिलापको

---

[54] *Devid H.Holmberg-Order in Paradox-Delhi-1996, Page XII & XIII,* ..." The earliest recorded Tamang encounters with the kings of Gorkha who were later to consolidate Nepal was one of active opposition. As I note in the Text. Vajracharya and Sherestha(1976[v.s.2032]) report an attack in 1739 by a" Ghale-Bhote" force on the troops of Narabhupal Shah-the father of Prithivi Narayan Shah who consolidated the state of Nepal into the form we more or less know it today.Tamnag lore includes conflits and battles between local Tamang "kings" and the force of Gorkha coming out of the west. Typical of such accounts is the following from the village of Bumtang.

Before Prithivi Narayan Shah, the Gorkha kings sent soldiers to this area and the Tamang kings killed them.The Tamang were called to Salyan and they hid their weapons in the sand. When the Gorkha soldier came they killed them.They[force from Gorkha] came back and killed the Tamang king. They came here and killed them.Likewise the local legends of Ghale kings throughout the region record wars with the Gorkha kings prior to consolidation..."

लागि दूत पठाए। दूतले मित्रताको लागि गोर्खा महाराजले सीमाना ह्याबेङ खोलाको किनारमा हातहतियार विहिन मेलमिलाप तथा धर्म सम्बन्धी सन्धि हुने बताए। सोझा तामाङ राजा वाअीबा ग्लेले हुन्छ भनि चैत्र पूर्णिमाको दिन तिथि तय् गरी पठाए। तर गार्खा राजाले आफूले तोकेको शर्त तोडेर खोलाको बालुवामा हातहतियार तरवार, खुंडाहरु लुकाएर राखे। दरवारबाट निस्कन अघि ग्लेका म्हा (ज्वाँई)ले वाअीबा ग्ले लाई बिन्ति बिसाए "आस्याङ ! ज्यार्तीको विश्वास गर्नु हुन्न ! हामीले पनि आफ्नो अन्तरिक रुपमा आफ्नो सुरक्षाको केही प्रबन्ध गर्नु पर्छ" भने। त्यसैवेला कान्छो ग्लेजा(राजकुमार) कुन्दोस्हाङबोले पनि सहि थापे तर दुवैको बिन्तिको ग्ले दागुरबाट सुनवाइ भएन। त्यसपछि चुपचाप वाअीबा ग्लेको ज्वाँई र ग्लेजा कुन्दो स्हाङबोले आफ्नो धनुष काँढ अघिल्लो दिन नै नजिकैको 'केसीङ दोङबोरी' (चिलाउने बोटमा) लगेर राखे। तय भएको तिथिमा सन्धि गर्न आफ्नो सम्पूर्ण भाइ भारादार सहित वाअीबा ग्ले सन्धि स्थल 'याबेङ स्योङ' पुगेको मात्र के थिए। धुर्त गोर्खा राजाले आफ्नो सैन्यलाई वाअीबा ग्ले सहित सबैलाई मार्दै याबेङ खोलामा बगाइ दिए। ग्लेको कान्छा ग्लेजा(राजकुमार) र ज्वाँईले आफ्नो धनुर्विद्याबाट गोर्खा सेनासंग लडे।

लड्दा लड्दै कुन्दो स्हाङबो (कान्छा राजकुमार( चाँहि लड्दै भाग्दै जाँदा आरुघाट तरि लमजुङको पाअीकु(पैकु)मा पुगे। उनले त्यँही नै आफ्नो राज्य स्थापना गर्न सफल भएका थिए। त्यहाँ कुन्दोस्हाङबोलाई 'चाअीम्हीकी र नाअीसीङ ग्ले (घले)को नामले पुकारिन्थ्यो भनिन्छ। उनको चार भाई ग्लेजाहरु जेठा तामा ग्रोङ, महिला चामा ग्रोङ, साअीँला कुले ग्रोङ र कान्छा तुले ग्रोङ थिए। पाअीकुका बासिन्दाले कुन्दो स्हाङबोका चारभाई छोराहरुलाई 'तमु' (तामाङमु )यीनीहरु तामाङको सन्तान थिए भनेर चिनाउन 'तमु' भन्न थाले भनिन्छ।

उता दागुरका ज्वाँईले दुई जना ग्लेका छोराहरु बचाउन सके। दरवारमा पुगेर सबै बृतान्त रानी सीलिक्मोलाई सुनाए। गोर्खालीहरुले दरवार सम्म धावा बोलेको खबर वाअीबा दरवारमा आइपुग्यो। रानीले दरवारमा भएको सयौं टपरीहरुमा भात र तिहुन लतपताएर दरवारको मूलद्वार अनि पछाडि चारैतिर छरेर राखिन र आफ्नो वाअीबा राजवंश बचाउन 'उजेन' लेकमा भएको गोठमा ज्वाँइको सहयोग लिई गइन। गोर्खालीहरुल दरवारमा बाहिर खाएको जुठो पुरो टपरी देखेर वाअीबा राजाका राजकुमारहरुले ठूलै युद्धको तयारी गरीसकेको अनुमान गरेर उनीहरु त्यहाँबाट फर्किए। वाअीबा राजाका ह्युल्बाहरुले(रैतीहरु) गोर्खाहरु कहाँसम्म गएछन भनेर पछ्याएर जाँदा युद्ध भएको स्थल याबेङ खोलासम्म

55 बिगेन्द्र तामाङको 'याबेङ स्योङ-२०५४, नेपाल तामाङ घेदुङ' तामाङ भाषाको कथासंग्रहमा पनि यो कहानीलाई सत्यघटनामा अधारित कथाको रुपमा दिएको छ।

पुगेछन । त्यहाँ उनीहरुले वाओीबा ग्ले दागुरको शिर खोलाको भूमरी माथि तैरिरहेको देखे । राजाबाट आफ्नो ह्युल्बालाई हुकुम भयो "यो खस राजाले आफ्नो सतधर्म वाचालाई त्यागेर आज हाम्रो यो दुर्गति बनायो अब उसको वंशको यो धर्तीमा अगति परेर अन्त हुनेछ" भनि सकेपछि त्यो तैरिरहेको ग्लेको छिनिएको शिर पानीमा डुब्यो । अनि त्यहाँ पुगेका ह्युल्बाहरुले राजा प्रति मोन्लम गर्दैगर्दा एकै छिनमा याबेङ खोलाको पानी रक्ताम्य भएर किनारका सबै ढुंगाहरु ढाक्नेगरि बढ्यो र त्यो रक्ताम्य पानीले ढाकेको सबै ढुंगा रातै भए । उनीहरु छक्क परेर त्यो दिनदेखि याबेङ खोलामा हाम्रो ग्ले (ग्याल्साको) वाङ शत रहेछ र अबदेखि हामीले यो खोलाको पानी खानु हुन्न, यो सीमा नाघेर खस राज्यपट्टि जानुहुन्न भनेर ह्युल्बाहरु ग्लेसा(ग्याल्सामा) फर्के र सबै वृतान्त अरु ह्युल्बाहरुलाई पनि सुनाए ।" त्यो बेलादेखि त्यसभेगका वाओीबाहरुले त्यो याबेङ खोलाको पानी खाँदैनन् र त्यो खोला तरेर जाने अहिलेसम्म जाँदैनन् ।[55]

त्यही खोलाको ढुंगा लगेर वाओीबा राजाको स्मृतिमा छ्योर्तेन बनाएको बताइन्छ त्यो वाओीबा थरको मात्र बस्ती भएको सेमजोङ गाउँको गओीरा नाम्सामा छ । यो गाउँमा वर्षको एक पटक आश्विन शुक्लपक्ष दशमीका दिन 'किर्पा क्लाङबा' (धनुषकाँढ ) तारो हानेर खेल्ने, शिकार खेलेको जस्तो सडक नाटक देखाउने प्रचलन पनि अध्यवधि छ । स्थानीय धनसुर वाओीबाका अनुसार यो वाओीबा ग्लेको पालादेखि चलिआएको प्रथा हो । यो बाहेक वाओीबा र खस (गोर्खा) राजासंग सम्बन्धित युद्धका अरु पनि थुप्रै प्रशंगहरु त्यसभेगका बुढापाकाहरुले अझै बताउँछन ।



# ༩་ གུལ་མི་ ཏློ་ ཕྱེན་གློ་ས་ མ་ཀ་ཝན་པུར་

# गुल्मी ग्लेसा/ग्याल्सा, मकवानपुर

## (THE GULMI KINGDOM OF MAKWANPUR)

नेपालको सबैभन्दा बढी तामाङको जनसंख्या अर्थात जनघनत्व भएको जिल्लाहरु मध्ये मकवानपुर एक हो । यो जिल्लामा हिमालदेखि महाभारत, चुरेपहाड अनि भित्रि मधेशसम्मको पुरै भूभागको रहनसहनमा तामाङ जातिको बासस्थान पाइन्छ । तामाङहरुको बाहुल्यता भएकोले पनि मकवानपुरमा तामाङ राजा थियो भन्दा अनौठो मान्नु पर्दैन । मकवानपुरका फापरबारी, वेतीनिका तामाङहरुमा घिसिङ थरका तामाङ राजाले राज्य गरेको कथन अझै सुन्न पाइन्छ । झन फापरबारी गुल्मीथुम अभेरीमा पाइएको प्राचीन दरवारका अवशेषहरुले त्यो तामाङहरुको भनाईलाई सार्थकतामा बदलिदिएको छ ।

तामाङ विद्वान सिताराम तामाङज्यूले सेन वंशकै पुर्खाले तामाङहरुको राज्य खोसेका लेख्नु भएको छ। सिताराम तामाङका अनुसार सेनहरुको कब्जापूर्व मकवानपुर को वेतिनीमा घिसिङ थरको तामाङ राजा थियो र जसको दरवारको भग्नावशेषहरु समेत पाइएको लेख्नु भएको छ । त्यसैगरी नेगीले पनि झन स्पष्ट पार्दै घिसिङ राज्यकालको अभेरीको गुल्मी थुममा भेटिएका दरवारका भग्नावशेष र त्यहाँ फेला परिएका वास्तुकला, सिंहकार प्रस्तर मूर्ति, प्राचीन ईंटा, तामा, माटाका मुद्राहरु २७ सय वर्ष पुरानो भएको दावी समेत गर्नु भएको छ। उहाँका अनुसार- यस्तै प्रकारका ऐतिहासिक एवं प्राचीन बस्तुहरु निजगढ, तामगढीसम्म पाइएकाले त्यहाँसम्म तामाङ राज्यको अस्तित्व थियो ।

मकवानपुरमा तामाङ राजा भएको सन्दर्भमा कसै कसैले यसो पनि भन्ने गरेको पाइन्छ । "सेनहरु वास्तवमा नेवारहरुले ताङहरुलाई भन्ने सें वा सेँय् (भोटे भन्ने बुझाउन)बाट सेन भएको हो, त्यसैले सेनहरु तामाङ वा सें (भोटे) हो । किनकि नेवारहरु मकवानपुरको टिस्टुङ पालुङ लगायत ठाँउहरुमा मल्लकाल अघिदेखिनै बसोवास गरिआएको ऐतिहासिक तथ्यहरुले बताउँछन । तसर्थ गोर्खाका छट्टु राजा पृथ्वीनारायणका शसुराली मकवानपुरका सेन वंशी राजालाई लिम्बू इतिहासकार इमानसिंह चेमजोङले पश्चिम नेपालका किराती राजा मुकुन्द सेनले आफ्नो कान्छा छोरा ल्होहाङ सेनलाई मकवानपुर राज्यदिएको र उनले नै सन १६०९ मा विजयपुर गढसम्म मकवानपुरको राज्यबढाएको उल्लेख गरेका छन् । तर त्यहाँ उनले गरेको

दावी अनुसार मकवानपुरमा मंगोल तामाङहरु बाहेक अन्य (किराती अर्थात लिम्बू) जातिको आदिम बसोबास स्थल नभएकाले मंगोल वंशको भनिएका सेनहरु तामाङनै हुनसक्ने कुरा माथिको सिम्रौनगढसम्म तामाङहरुले राज्य गरेको स्थानीय आदिवासी तामाङको गुल्मी राजा भएको ऐतिहासिक कथनसंग निकटै पुऱ्याउँछ । किनभने मकवानपुरदेखि बारा निजगढसम्म लिम्बू वा राई किरातहरुको बिउसम्म पाउन मुस्कील पर्छ ।

तामाङहरु तत्कालीन काठमाण्डौ उपत्यकाको राज्यहरुदेखि दक्षिणतिरको मूल नाका वा सीमा मकवानपुर गढी तथा भिमफेदी लगायत माथिल्लो भेगमा बसोवास तथा बाहुल्यता रहेको हुँदा यो जातिलाई मुर्मी वा सीमानामा बस्ने जाति भएको कुरा अन्वेषकहरुको मत छ । यसले पनि मकवानपुरमा तामाङहरुको कुनै समय प्रबल शक्ति वा राज्य भएको ईंगित गर्दछ ।

शासक जातिकाले शासकहरुकै मात्र लेखेको नेपालको इतिहासले ठगेता पनि मकवानपुरका तामाङहरुले आफ्नो पुर्खादिखि आजसम्म कमसेकम तामाङ राजा थियो भन्ने कुरामा विश्वस गर्दछन । गुल्मी रले घिसिङ थरको थियो । यो अभेरीको भग्नावशेष तामाङ राजाको दरवारको भग्नावशेष हो भनि आइरहेको छ । यसले मकवानपुरमा तामाङ राज्य भएको कुरा स्पस्ट हुन्छ ।



# ༨་ གཞན་དོ་ ཡོ་ཡོ་ ཀཡ་ས་དུ་ཀྲ
# अन्य स्थानहरुमा तामाङ ग्लेसा
# (SOME OTHER TAMANG KING & KINGDOMS)

तामाङ राजाहरुको बारेमा नेपालमा मौखिक कथनहरु थुप्रै पाइन्छन । यहाँ चर्चा गर्न लागेएको चाहिं माथिका तामाङ राजाहरुको जस्तो विवरणहरु प्राप्त नभएका तामाङ राजा र अधिराज्यको हो । तामाङ अधिराज्यको नाम र राजाको नाम मात्र सुनेको र वंशावली तथा विभिन्न प्रसंगहरुमा उल्लेख भएको राजा तथा राज्यको जानकारी प्रस्तुत गरिन्छ ।

## ༨.༡ གོལ་ཛོང་ ཏྲི གोल्जोङमा ग्ले

## (KING IN GOLJONG, RASUWA)

रसुवा जिल्लाको गोल्जोङ गाउँ तामाङहरुको मात्र विसुद्ध बस्ती छ । गोल्जोङको नजिकै एउटा दरवारको भग्नावशेष छ । गोल्जोङका तामाङहरुले त्यो तामाङ राजाको दरवार भनेर भन्छन् तर लेख्य परम्परा तथा अन्य शैक्षिक ज्ञान आदिको अभावमा र मौखिक परम्परा पनि दह्रो नरहेकाले को राजा थिए ? कुन थरका थिए ? आदि इत्यादि सूचनाहरु पर्याप्त छैन । गोल्जोङका बासिन्दाहरुमा यो भग्नावशेष हाम्रो राजाको हो भन्ने संस्मरण मात्र भएपनि मौखिक अवशेषको रुपमा रसुवा जिल्लाको गोल्जोङ पुग्दा सुन्न र दरवारको भग्नावशेष देख्न पाइन्छ । स्थानीय ग्ले(राजा) वंशका तामाङहरुले भने यो हाम्रै पुर्खाको दरवार हो भनेर मान्दछन । गोल्जोङमा हाम्रो राजाको ग्याल्खाङबाट ग्लेठीम चलाउनु हुन्थ्यो । यहाँ ग्याल्दाङ, बोङजो, गोम्जा, नाओसीङ ग्ले चारथरको तामाङ राजवंशका सन्तानहरुको बसोबास छ ।

## ང་ཉ་ ཧུང་ག་ར་ཛ་ ཧྲི་ཤྱང་གུ་ हुंगराजा ह्रीस्यांगु

## (KING HUNGGARAJA IN HRISHYANGGU)

शैलुङ भेगका 'खे ङा' मेम्हेहरु मध्ये एक योन्जन मेम्हे हुंगाराजाको राज्य भएको कुरा ह्रीस्याङ्गगुका बुढापाका तामाङहरुले बताउँ छन् । "तामाङ जाति" पुस्तकको पृष्ठ ३० मा परशुराम तामाङले 'रुअीछेन च्योप्पे'मा योन्जनको राजा ह्रीस्यांगुमा हुंगाराजा थियो भन्ने सूचना बाहेक जारनाङमा पनि लार्चेनलाई कसैकसैले हुंगराजा भन्ने गरेको कथन सुन्न पाइन्छ । तर विस्तृत रुपमा खोजविन सोध हुन बाँकिनै छ । ह्रीस्याङगुका योन्जनहरुको दोङह्राप, फाह्रापमा हुंगाराजा भएको कुरा ह्रीस्याङगुका योन्जनहरुले बताउँ छन् । 'कुम्पा खा छ्योओी' ग्रन्थमा वर्णन गरिएको 'खे ङा' मध्ये ह्रीस्याङगुको ह्योन्जनहरुको र आन्द्रबुङ मोक्तानहरुको कविला राज्य भएको बताइन्छ । ग्ले हुंगाराजा र उनको बारेमा प्रथमिक सूचना प्रप्त भएको छ आगामी संस्करणमा अझ व्यापक खोजी गरि प्रस्तुत गरिनेछ ।

## ང་ཉ་ དོལ་ཁ་ སའི་ཐུམ་ རེ་ दोलखा साओीथुम

## (TAMANG KING IN SAITHUM, DOLAKHA)

दोलखा जिल्ला पनि तामाङ बहुल जिल्ला मध्ये एक हो । यहाँ पनि प्राचीन तामाङ भाषा तथा संस्कृतिको थुप्रै अवशेषहरु अझै पाइन्छ । यो जिल्लामा तामाङ राजाहरुले राज्य गरेको कथनहरु आकलझुकल सुन्नमा आएको छ । दोलखाको साओीथुम भन्ने स्थानमा तामाङ राजाले राजगरेका थिए भनिन्छ । दोलखाको उत्तर पट्टि भने तिब्बतमा बौद्ध धर्मको प्रवेश ताकादेखिनै बौद्ध राज्य भएको कुरा त्यहाँ स्थित पुरानो ङीङ्मा गोन्पाहरुको इतिहासले देखाएको छ । दोलखाका तामाङ ह्रुओीहरु मध्ये पुरानो ह्रुओी पाखीन ह्रुओीकै तामाङ ग्ले भएको कुरा मौखिक कथनहरुमा सुनिन्छ ।

## ང་ཉ་ རྒྱང་ས་བཔ་ས་ ཐེན་ ཕ་དྲབ་ དོང་དྲཔ་རེ་ གྱལ་ས་

## वंशावलीहरुमा उल्लेखित ग्ले/ग्याल्पो,ग्लेसा/ग्याल्सा

## (TAMANG KING & KINGDOMS ACCORDING TO TAMANGS GENEALOGY )

तामाङ जातिको वंशावलीहरु जीक्तेन तामछ्योओी, ह्रुओीछेन च्योप्पे, ह्रामा, तामाङ च्युङनीला ठुङसा, बब्साहरु, ताम्बाकाओीतेन जो अद्यावधि मौखिक तथा 'तामयीग' तामाङ लिपिमा(लामालिपिमा) लेखिएका छन । यी ग्रन्थहरु तथा ताम्बाको मौखिक काओीरनमा तामाङ थरहरुको उत्पतिसँगै तिनीहरुको उद्गम राज्य तथा र ाजकूलको नाम दिइएको छ ।

जसले गर्दा प्राय तामाङ थरको आफ्नै झुण्ड या कविला रहेको देखिन्छ। पुरानो केही तामाङ बस्तीहरुलाई हेर्दा उनीहरुको घर एकैठाउँमा झुम्म र घना पाइन्छ। ती गाउँहरुलाई हेर्दा झण्डै अहिलेको आवासीय क्षेत्रहरु जस्तो भान हुन्छ। उदाहरणको लागि नुवाकोट जिल्लाका किमताङ, साङगाम, धादिङ जिल्लाको सोमजोङ, सेर्तुङ, बोराङ, जारनाङ, अनि रसुवा जिल्लाका गोल्जोङ, थाङमाचेत, गलाङ, हाकु, दुङज्ये आदिका थुप्रै प्राचीन तथा पुरानो तामाङ बस्तीहरुलाई लिन सकिन्छ। यी बस्तीहरुमा भएको थरगत बसाइ संरचनाले पनि कविला तथा भुरे टाकुरे तामाङ राजाहरुको स्वतन्त्र राज्य भएको संकेत मिल्छ।

तामाङ बस्तीहरुमा प्राचीन समाजिक संगठन राज्यको सानो इकाईको रुपमा चोबो (चोहो), गाअुरुङ (गअुराअी), मुल्मी, दोप्ता, गान्बा, ताम्बा, कुइ्येर( कोङग्यार), लामा, बोन्बो, आदि रहेको समाजिक संगठन पाइन्छ। यस्तो संगठनल समाजमा आइपरेको धार्मिक तथा सांस्कृतिक विकृतिहरुको विरुद्ध कार्य गर्दथ्यो। यो संगठनका गान्बाहरु बसी एउटा पोङ राखेर अदालतले गर्ने, निसाफ गर्ने गर्दथे। विद्यमान सामाजिक एवं सांस्कृतिक अवशेषहरुले पनि तामाङ समाजमा व्यवस्थित स्थानीय राज्य इकाईको रुपमा रहँदुङ रहेको पुष्टि हुन्छ। वंशावलीमा उल्लेख थर हरुको ग्ले(ग्याल्पो) वंश कूल भएको र ह्रुअीबाहरुको आगमन(उत्पति) भएको ग्लेसा( ग्याल्सा) राज्य तथा बाब्सा सन्तवीर पाखीनको ताम्बाकाअीतेने ह्रुअीछेन च्योप्गेमा निम्न प्रकारको पाइएको छ।

<u>ह्रुअीबाहरुको आगमन भएको ग्लेसा(ग्याल्सा) वा राज्यको नाम ग्ले(ग्याल्पो) र ाजवंश कुलको नाम</u>

| | |
|---|---|
| १.ङुमुजन थरको ङुमा ग्याल्सा, | १. ग्लान थरको कूल पेकार ग्याल्पो |
| २. बज्यु थरको गुपा ग्याल्सा, | २. गोम्देन थरको ज्येवेबन्द ग्याल्पो |
| ३. टुपा थरको टुक ग्याल्सा, | ३. तोअीसाङ थरको ह्रअीगी ग्याल्पो |
| ४. स्याङबो थरको स्याङ ग्याल्सा, | ४. वाअीबाको थरको छेमेन ग्याल्पो[56] |
| ५. मार्पा थरको चीता ग्याल्सा, | ५. मार्पा थरको बोअीला ग्याल्पो |
| ६.मोक्तान थरको मुगु ग्याल्सा, | ६. मोक्तान थरको याब्जे याही ग्याल्पो, छेमेन ग्याल्मो र छीप्चन ग्याल्पो। |

७. ग्याबा थरको ग्यानाक ग्याल्सा,

८. ग्हीसीङ थरको सेरगाङ ग्याल्सा।

९. दोङ थरको दोङ ग्याल्सा आदि

तामाङ थरहरुको फोला र वव्साको आधारमा आफ्नै राज्य तथा आफू आएको राज्य अनि आफूले मानिआएको राजा र राज कूलहरुको बारेमा बनाइएको पाइन्छ। यसरी तामाङहरुको इतिहासका बारेमा मौखिक अवशेषको रुपमा वशावलीमा आफ्नै राज्य, राज वंश वा कुल रहेको कुरा तामाङ थरहरुको उत्पति बारे वर्णनमा पाइन्छ। यसले स्पष्टरुपमा तामाङ राजा र राज्यहरु इतिहासको कालखण्डमा भएको कुरालाई ईङ्गित गरेको छ।

अन्तमा तामाङ इतिहास बारे संक्षिप्तमा:

तामाङ राजाहरुको बारेमा मौखिक कथनहरु बाहेक दरबारका भग्नावशेषहरु भेटिएको स्थानहरुको संरक्षण तथा व्यापक उत्खनन्, अनुसन्धान हुन सकेको छैन्। कतिपय स्थानमा मौखिक रुपमा भए पनि त्यसलाई लिपिबद्ध गर्न सकिएको छैन। यस्ता मौखिक तामाङ इतिहास, भेटिएका भग्नावशेषहरुको उचित संरक्षण संवर्द्धन गर्न सके लेख्य परम्पराको अभावमा लेख्न नसकिएको प्राचीन तामाङ इतिहासलाई समेत लिपिवद्ध गरेर भावी तामाङ पिढीलाई तामाङको इतिहास बारे सूचना उपलव्ध गराउन सकिने छ साथै भग्नावशेषहरुको आसपास आवश्यकीय उत्खनन् गरेर अझ गहन रुपमा तामाङ इतिहासको खोजी तथा पुनर लेखन गर्न सकिन्छ।

मौखिक अवशेषको रुपमा रहेको इतिहासलाई एउटा वास्तविक इतिहासको रुपरेखा नजिक पुऱ्याउन तामाङ जातिको इतिहास को खोजी शिलापत्र, ताम्रपत्र, भोजपत्र, ताडपत्र आदि इत्यादि श्रोतको प्रतिक्षामा मात्र सिमित रहनु हुदैन्। तामाङहरुले पुस्तौंदेखि कहँदै आएका नाम्याको क्वाअीमा होस् या म्हाने, दोराक्वाअीहरु, अनि तामाङ गान्वा, वृद्धजीवी, पुराना वुढापाकाहरुको जीवनी, तामाङ ठुङसा, वव्सा, तथा नाम्सा नाम्याको नाम्थर, नुन्थर, चेम्काहरु, वंशावली, आख्यानहरु आदि जताततै टाँसिएर कुनै न कुनै रुपमा अवशेषको रुपमा रहेको पाईन्छ। यिनै तामाङ नीधिहरुलाई राम्ररी केलाएर तामाङ इतिहासका कनिकाहरुको पनि कनिका भित्रसम्म पुगेर तथ्यहरु वटुल्दै तामाङ इतिहासलाई छाम्नु पर्ने हुन्छ, तब मात्र तामाङ जातिको गौरव, मौलिक पहिचानहरुको दह्रो इतिहास भावी पुस्ताका तामाङहरुले पाउन सकिने आशा गर्न सकिन्छ र तामाङ समाजमा अभाव खट्की रहेको इतिहासलाई पुरा गर्न सक्षम हुनेछ। थुजेछे

॥ थुम्जी ॥





आफ्नै गाउँमा बुनेको लुगाएका धादिङ जिल्ला बोराङयाउँका बृद्धहरु तामाङहरु
(कु-पार-१४ / स्युप्पा :अजितमान)



तेमालको रिन्जेन दोर्जे बल राजाको
दरवार को भग्ना अवशेषहरु रहेको स्थान काभ्रे पलान्चोक जिल्ला
(कु-पार-१५ / स्युत्पा : प्रतिक ड्यासुर )




तामाङ दम्पत्ति



तामाङ लुगामा सिक्किममली तामाङ युवती

# प्रकाशित कृतिहरू



(अजितमान तामाङ)

(१) इयाङला काञीरानरी क्वाञीखा ह्रुप्पादुत्वा (तामाङ भाषामा-कविता संग्रह) सन १९९२

(२) साङग्ये इयाङला ग्याम (तामाङ भाषामा संक्षिप्त बुद्ध जीवनी) सन १९९३

(३) बरु फ्युल्सा (धनी देश तामाङ भाषामा कथा संग्रह)-सन १९९४

(४) Basic word Book for Tamang Language (तामाङ संज्ञा संग्रह)-सन १९९४

(५) जोमक्लाङ, ओमक्लाङ, कोच्चाक्लाङ( गाउंखाने कथा संग्रह)-सन १९९५

(६) तामाङ ताम्पे ( तामाङ उखान टुक्का संग्रह)-सन १९९५,

(७) तामाङ भाषा, लिपिको पहीचान र आलेखन प्रणाली-सन १९९७

(८) [illegible] ( तामाङ लिपि ) सन १९९८

(९) तामाङ जातिको मौखिक इतिहासका अवशेषहरु-२००२

## प्रकाशन्मुख कृतिहरु :-

(१) तामाङ ग्योत देन यीग लोप्के (तामाङ भाषा र लिपि सिकौं)

(२) तामाङला वान/क्वान (तामाङको लुगा)

(३) तामयीग लिपिको इतिहास

(४) ल्होछार। लोसार डोस्येबा-सन् २००२

**सम्पादक तथा प्रकाशक** :- (१) जाम्बुलीङ डीसरेला ( साप्ताहिक )

(२) कोनडोङडोङ (समसायिक साहित्यिक संकलन)

**सम्पादक** :- छारम्हेन्दो द्वैमासिक, नेपाल तामाङ घेदुङ

**अतिथि सम्पादक**:- गाङतोक ह्युल्सा, सिक्किम

साञी (मुल्य) : नै.रु. भा.रु. २०।-($ & EURO 2.00)

ISBN 99933-34-94-4

